• वर्ष ११ • अङ्क ५ • पौष २०६६ • पूर्णाङ्क १२५

## सम्पर्क कार्यालयहरू


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी, फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट, फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल, फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौँ**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौँ**, सिमलटार
- **काठमाडौँ**, तीनकुने (मुनि भैरव)
- **ललितपुर**, गोदावरी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**

## श्रीस्वस्थानी माता विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौंमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| बसुन्धरा | साँझ ४:३० बजेपछि | सोमवार र मङ्गलवार |
| ललितपुर | दिउँसो ४:०० बजेपछि | मंगलवार र बिहीवार |
| भक्तपुर | दिउँसो ४:०० बजेपछि | शनिवार र बुधवार |
| बनेपा | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतवार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक बृहस्पतिवार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।


**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौं ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, काठमाडौं, नेपाल**
**फोन नं: २०७१२००, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

*समय, काल, परिस्थिति आफ्नै रफ्तारमा अगाडि बढिरहेको छ। देश, काल, परिस्थिति पनि अझै अस्थिर, अन्यौलताकै घेराभित्र अगाडि बढेको देखिन्छ। विभिन्न राजनैतिक दलका पार्टीहरु पनि आआफ्नै स्वार्थमा, आआफ्नै पार्टीगत, व्यक्तिगत र आफ्नै दायराभित्र नै अलमलिरहेको पाइन्छ। जबसम्म व्यक्ति आफ्नो परिधिबाट माथि उठ्न सक्तैन, समाजको लागि केही गरौँ भन्ने भावना राख्तैन, तबसम्म न त कुनै राजनैतिक संघ संस्था अथवा कुनै संगठनले नै समाजलाई केही दिन सक्छ, न गर्न नै सक्छ। यी सबै कुराहरूबाट माथि उठ्नका लागि व्यक्तिमा त्यागको भावना अत्यन्तै जरुरी हुन्छ। जबसम्म व्यक्तिले त्याग गर्न सक्दैन, जबसम्म व्यक्ति आफ्नै स्वार्थभन्दा माथि उठ्न सक्तैन, जबसम्म व्यक्तिले आफ्नो जीवनलाई विराट् स्वरुपबाट हेर्न सक्तैन तबसम्म यी कुराहरू केवल नारामा मात्र सीमित रहन्छन्, केवल भाषण अथवा प्रवचनमा मात्र सीमित रहन्छन्। त्यसैले आजको आवश्यकता भनेकै व्यक्तिहरुले आफ्नो दायराबाट माथि उठ्नुपर्ने, व्यक्तिले साँच्चिकै आफूलाई समाजको उदाहरणीय पात्र बनाउनेतर्फ लाग्नुपर्ने आवश्यकता हामीले महसुस गरिरहेका छौँ। यी सबै केवल आध्यात्मिक शक्तिको जागरणले मात्रै सम्भव हुन्छ। जब व्यक्ति आध्यात्मिक भावभूमिले ओतप्रोत हुन्छ, आध्यात्मिक भावनाबाट अगाडि बढ्दछ, तब बल्ल उसले आफ्ना परिधिहरुलाई तोड्न सक्छ। आफ्नो वास्तविक कर्तव्यलाई, आफ्नो जिम्मेवारीलाई उसले वहन गर्न सक्छ। त्यसैले, आजको समयको आवश्यकता पनि हो कि चाहे राजनैतिक दलका नेताहरू हुन् अथवा जिम्मेवार व्यक्तिहरू हुन्, चाहे कर्मचारी हुन्, चाहे संघ संस्थाका व्यक्तिहरु हुन्, सबैजना आध्यात्मिक भावभूमिबाट अघि बढ्नुपर्छ, यी कुराहरुलाई हामीले आत्मसात् गर्नुपर्छ। त्यसरी अगाडि बढ्दा नै समाजले एउटा उचित निकास पाउन सक्छ। देश, काल, परिस्थिति पनि तब मात्रै समाधानको दिशातर्फ उन्मुख हुन सक्छ।*

*यसपालिको गोरक्ष निखिल वाणीको अंकलाई हामीले 'श्रीस्वस्थानी माता विशेष'को रुपमा निकाल्ने कोशिश गरेका छौँ। माता स्वस्थानी सारा विश्वब्रह्माण्डकै देवी हुनुहुन्छ, सारा जगत्की पूजनीय देवी हुनुहुन्छ जसलाई माता पार्वतीको पनि स्वरुप मानिन्छ। तैपनि देश, काल, परिस्थितिको आफ्नै किसिमका श्रद्धा, भक्ति, समर्पण गर्ने चलन हुन्छ, उहाँलाई प्रचलितरुपमा नेपालकै देवीको रुपमा पनि विशेष गरी मान्ने गरिन्छ। छिमेकी मुलुक भारतमा पनि माता स्वस्थानीलाई मान्ने, पूजाआजा गर्ने गरिएको पाइँदैन तर हामी नेपालीहरूका लागि भने उहाँ एउटा नेपाली देवीको रुपमा पूजित हुनुहुन्छ। प्रत्येक पौष पूर्णिमादेखि एक महिनासम्म व्रतादि बसेर, स्वस्थानी कथा सुन्ने र कथामा भनेअनुसार व्रत बसेर, नीति नियमहरु पालन गरेर माताको व्रत पूरा गर्ने चलन रहिआएको छ। स्वस्थानी व्रतकथामा वर्णन गरिएका पात्रहरु, सबै भूमिहरु, क्षेत्रहरु हाल पनि नेपालका विभिन्न ठाउँहरुमा सुरक्षित छन्। काठमाडौँनजिकै रहेको साँखुमा स्वस्थानी कथामा उल्लेख भएका कतिपय पात्रहरुले व्रत बसेर पूर्णता प्राप्त गरेका कैयौँ अलौकिक घटनाहरु पनि सुन्न पाइन्छ। ती कुराहरुका साक्षी आज पनि छन्। यसरी परापूर्वकालदेखि माता स्वस्थानीको उच्चता, विराटताको बारेमा जुन चर्चा गरिएको छ, जुन कथाहरुमा वर्णन गरिएको छ, जुन ठाउँहरु हाम्रै काठमाडौँलगायतका क्षेत्रमा छन्, ती क्षेत्रहरुको बारेमा उचित संरक्षण हुन नसक्नु, गरिमा र महिमाको बारेमा कतै चर्चा नहुनु सबैको लागि दुःखको कुरा हो। त्यसैले, यस अंकमा हामीले यस क्षेत्रको बारेमा पनि केही समेट्न मिल्ने विषयको जानकारी दिएका छौँ, प्रसंगहरुलाई यहाँ उल्लेख गरेका छौँ। वास्तविकरुपमा उहाँको खोज, अनुसन्धान त पत्रिकामा प्रकाशित लेख रचनाहरु मात्रैले गर्न सक्तैन। सबै मिलेर उहाँको खोज, अनुसन्धान गरेर, उहाँको वास्तविक उच्चता, महिमा, विराटतालाई विश्वसामु उजागर गर्न अझै बाँकी छ। आशा गरौँ, भविष्यमा माताको कृपा भयो भने उहाँको खोज, अनुसन्धान गरेर धेरै कुराहरु यहाँहरुसमक्ष प्रकाशमा ल्याउनेछौँ।*

*अन्तमा, यस अंक निकाल्ने क्रममा भए गरेका गल्ती, कमी कमजोरी, न्यूनताहरूका लागि परमपूज्य सद्गुरुदेवहरु र यहाँहरुसँग क्षमा माग्दै उचित सल्लाह, सुझावको अपेक्षा राख्दछौँ। अस्तु!*

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ

**मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ। गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ। सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ। यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्‌गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ। गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–**

### परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

*वन्दे नारायणं देवं सद्‌गुरुं निखिलेश्वरं।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानव जीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ। आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३३ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो। वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो। आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यास जीवन बिताउनुभयो। त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो । संन्यास जीवनपश्चात् पुनः गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो। यसको लागि सयौं पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो। यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ डा. नारायणदत्त श्रीमालीको नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्‌गुरु आदिको संज्ञाले विभूषित हुनुभयो। आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो। हाल सद्‌गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ।

### श्री श्री महायोगी गुरु गोरखनाथ

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचम्।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ। महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ । योग मार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो । यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ । गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ। श्रीमद्‌भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ। विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौं हजारौं वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ। यसबारे विभिन्न विद्वान्‌हरूले थुप्रै अनुसन्धान गरेका छन्। आमाको कोखबाट नभई आवश्यकता अनुसार आफै प्रकट हुनुहुने महायोगी अजर अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ। उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नैपर्दछ। नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ। नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकामाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो । नेपालमा मात्र नभएर विश्वभर उहाँको सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन्। आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ ।

# सिद्धाश्रम शक्ति केन्द्र

## (आध्यात्मिक शक्ति अनुसन्धान संस्था)

सिद्धाश्रम शक्ति केन्द्र, आध्यात्मिक शक्ति अनुसन्धान संस्थाको स्थापना ०५६ वैशाख ८ गते भए पनि यसको विधिवत् दर्ता भने ०५६ वैशाख २३ गते मात्र भयो । परमपूज्य सद्‌गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरुरूपमा धारण गर्दै यो संस्था शुरुमा केही वर्ष काठमाडौँको कमलादीबाट सञ्चालन भयो । त्यसपछि बत्तीसपुतली, पुरानो बानेश्वर हुँदै संचालन भएको यस संस्थाको केन्द्रीय कार्यालय हाल बसुन्धरामा रहेको छ ।

समस्त भूमण्डललाई गोरक्ष निखिल ऊर्जाले आपूरित गर्दै गोरक्ष निखिल युग स्थापनार्थ अघि बढिरहेको यस संस्थाले विभिन्न आध्यात्मिक गतिविधिहरूलाई अघि बढाइरहेको छ । मुलुकभर विभिन्न सम्पर्क कार्यालयहरूमार्फत आफ्ना गतिविधिहरू अघि बढाइरहेको यस संस्थाले विभिन्न ठाउँमा स-साना एकाइहरूको गठन गरेर पनि समाजमा आध्यात्मिक गतिविधिलाई अघि बढाइरहेको छ । संस्थाका विभिन्न सम्पर्क कार्यालयहरूमा बिहीबारको गुरु पूजन, दिव्य गुरु महोत्सव, विभिन्न चाडपर्वमा पूजनादि कार्यक्रमहरू सम्पन्न भइरहेका छन् भने विदेशमा रहेका यससँग सम्बन्धित एकाइहरूले पनि आध्यात्मिक गतिविधिमार्फत विश्वमा आध्यात्मिक शीतलता छरिरहेका छन् ।

संस्थाले प्रत्येक महिना काठमाडौँ उपत्यकालगायत अन्य स्थानहरूमा रहेका विभिन्न शक्तिपीठ र मन्दिरहरूमा तान्त्रोक्त हवनहरू सञ्चालन गर्दै आइरहेको छ भने प्रत्येक वर्ष यस संस्थाले गोरखास्थित गोरख गुफामा श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा सवालाख रोट चढाउँदै आइरहेको छ । यसका अतिरिक्त कैयौँ मन्त्र हवन साधना, तान्त्रोक्त साधना, ध्यान, महोत्सव आदिका कार्यक्रमहरू सञ्चालन गरिसकेको छ भने गोरक्ष निखिल वाणी मासिकलाई निरन्तररूपमा प्रकाशित गरिरहेको छ । एकातिर आध्यात्मिक पत्रिकामार्फत संस्थाले आध्यात्मिक गतिविधिलाई समाजसामु लगिरहेको छ भने अर्कोतिर गोरक्ष निखिल सन्देश नामक साप्ताहिक रेडियो कार्यक्रमबाट पनि यसले आफ्नो अभियानलाई तीव्र बनाइरहेको छ । समाजमा योग्य, सबल, चरित्रवान् नागरिकहरूको उत्पादनका लागि शैक्षिक मिशनअन्तर्गत गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम सञ्चालन गरिरहेको यस संस्थाका विभिन्न तह र तप्कामा रहेका कार्यकर्ताहरूका लागि मासिक प्रशिक्षण तथा तालिमको पनि व्यवस्था हुँदै आएको छ ।

हाल अ.ना.प. शैली अपनाएर अगाडि बढिरहेको यो संस्थाको सांगठनिक स्वरूपअन्तर्गत सम्पर्क कार्यालयहरूको सञ्चालन भइरहेको छ भने यसै शैलीभित्र क्षेत्रीय कार्यालयहरूको पनि विकास भइरहेको छ । संस्थाको विकास र विस्तार हुने क्रममा कतिपय सम्पर्क कार्यालयका आफ्नै भवन बनिसकेका छन् भने कतिपयमा भवनका लागि जग्गाको व्यवस्था भइसकेको छ । थुप्रै सम्पर्क कार्यालयहरूमा विभिन्न स्तरका ध्यानका कार्यक्रमहरूका अतिरिक्त परामर्श सेवालगायत तान्त्रिक हिलिङ्ग पनि सञ्चालन भइरहेका छन् । यसप्रकार यो केन्द्रले आध्यात्मिक युग निर्माणको दिशामा अग्रणी भूमिका निर्वाह गरिरहेको छ ।

# आत्मिक निवेदन

*आत्मीय पाठकवर्ग,*

*'गोरक्ष निखिल वाणी' पत्रिका यहाँहरुलाई कस्तो लागिरहेको छ? अनेक बाधा, अड्चन एवं समस्याहरुका बावजुद पत्रिकालाई निरन्तरता दिँदै प्रबुद्ध पाठकहरुको कसीमा आफूलाई घोट्दै शुद्धता एवं स्तरीयतामा क्रमशः वृद्धि गर्दै जाने हाम्रो संकल्प एवं प्रयास रहँदै आएको छ। भौतिकतामा चुर्लुम्म डुबेको आजको समाजमा एउटा आध्यात्मिक पत्रिकालाई नियमितता दिनु र आफ्नो खुट्टामा उभिन सक्ने बनाउनु भनेको निश्चय पनि असम्भवजस्तो लाग्दछ। तर परमपूज्य सद्‌गुरुदेवहरुको आशीर्वादले यो असम्भवलाई सम्भव बनाउने कार्य तपाईंहरुबाटै भइसकेको छ। पत्रिकालाई युगौँ-युगसम्म जीवन्त राखी आउँदो पुस्तालाई हाम्रो आध्यात्मिक धरोहरको रुपमा हस्तान्तरण गर्ने जिम्मेवारी पनि तपाईं, हाम्रै काँधमा आएको छ।*

*प्रत्येक व्यक्ति स्वयं आध्यात्मिक पथमा अग्रसर भई आफ्नो परिवार, टोल, छिमेक, समाज, गाउँ, सहर, जिल्ला, अञ्चल हुँदै सम्पूर्ण देश अनि सम्पूर्ण विश्वलाई नै अध्यात्ममय बनाउने महान् अभियानलाई मूर्तरुप दिन पत्रिका सबैभन्दा सशक्त माध्यम बन्न सक्छ। अतः पत्रिका सदस्यता विस्तारको कार्यक्रममा यहाँहरुको सहयोगको अपेक्षा गर्दछौँ।*

*पत्रिकाको बिक्री मूल्य रू. ३०।- मात्र भएकोले तपाईंले कम्तीमा दसवटा पत्रिका मगाएर आफ्ना नाता-गोता, छरछिमेकमा बाँड्न सक्नुहुन्छ। तपाईंको घर, टोल, छिमेक वा नातागोतामा कहीँ पनि पूजा-आजा, हवन, विवाह, व्रतबन्ध, सप्ताह, जन्मदिन, मेला, पर्व, महोत्सव आदि हुँदैछन् भने त्यहाँ पत्रिकाको स्टल राखेर यसको महत्त्वबारे जानकारी गराउनुका साथै वार्षिक सदस्यताको लागि प्रेरित गर्न सक्नुहुन्छ।*

*यसका अलावा टाढा-टाढा रहेका आफ्ना नाता-गोता, मित्रजनलाई हुलाकमार्फत पत्रिका पठाउन सक्नुहुन्छ। यसो गर्दा आत्मिक सम्बन्ध अझ प्रगाढ हुन जान्छ।*

*यो पत्रिका यहाँहरुको आफ्नै भएकोले यसलाई फलाउने, फुलाउने र फैलाउने जिम्मा पनि यहाँहरुकै हो। यसैले, सम्पूर्ण पाठकहरुमा हाम्रो आत्मिक निवेदन छ– आफूलगायत कम्तीमा पाँचजना वार्षिक सदस्य बनाउने संकल्प आजकै दिनदेखि गरौँ।*

*यहाँहरु सबैको सहयोगले पत्रिकाको सदस्य सङ्ख्या निरन्तररुपमा वृद्धि हुँदै जानेछ जसले गर्दा पत्रिकालाई अझ स्तरीय एवं आकर्षक बनाउन मद्दत मिल्नेछ भन्ने कुरामा हामी विश्वस्त छौँ।*

*वार्षिक सदस्यताको लागि रु. ३५०।- (अक्षरेपी रु. तीन सय पचास मात्र) हामीलाई पठाउनुहोस्। त्यसपछिको बाँकी काम हामी गर्नेछौँ।*

*अन्तमा, आत्मीय पाठकवर्गहरुमा विनम्र अनुरोध छ कि पत्रिकाको स्वयंले अध्ययन गरौँ एवं आफ्नो परिवार तथा इष्टमित्रलाई पनि पढ्न अनुरोध गरौँ। यसका अलावा अन्य पाँचजना व्यक्तिलाई पढाउने प्रयास गरौँ।*

*संसारको सबैभन्दा ठूलो दान ज्ञान दान हो, तपाईंको सानो दानले कसैको जीवनमा नयाँ मोड आउन सक्छ, जीवनमा सदाबहार छाउन सक्दछ। त्यसैले परमपूज्य सद्‌गुरुदेवहरुको महान् योजनालाई मूर्तरुप दिँदै चरितार्थ गराउन आजदेखि गुरु कार्यमा सहभागी बनौँ र यस योजनालाई आ-आफ्नो तरीकाबाट सहयोग गरौँ।*

*पत्रिकाको बिक्री हाम्रो उद्देश्य होइन, अपितु परमपूज्य सद्‌गुरुदेवहरुको असीम अनुकम्पाले प्रत्येक जन-जनमा गोरक्ष निखिल ऊर्जाको सञ्चार गरी आध्यात्मिक युगको पुनः निर्माण गर्नु हो। अस्तु।*

# श्रीस्वस्थानी उपासना रहस्य

स्वस्थानी शब्दलाई केलाउनु पर्दा 'स्व' र 'स्थान' दुई शब्द मिलेर 'स्वस्थानी' बनेको छ । 'स्व'ले आफूलाई र 'स्थान'ले ठाउँलाई जनाउँछ । जो जहाँ छ, जुन रूपमा छ त्यसले त्यस ठाउँमा, त्यस रूपमा रहेर आफ्नो क्रियाकलाप, आफ्नो कर्तव्य र दायित्व निर्वाह गर्ने र त्यो निर्वाह गरेको दायित्वलाई पूरा गरेपछि प्राप्त गराइदिने फलको जिम्मा लिने शक्ति नै स्वस्थानी देवी हुन् । उहाँलाई हामीले पूजा, आराधना गर्ने गर्छौं । उहाँ भगवान् शिवसँग जोडिएको शक्ति हो । शक्तिविहीन शिव पनि शव हुन्छ भन्ने मान्यता छ । शक्तिमा शिवत्व छैन भने पनि त्यो शव नै हुन्छ । शक्तिभित्र कल्याणकारी तत्त्व हुनुपर्छ, मानव हित गर्ने कुरा हुनुपर्छ र सँगसँगै शक्तिभित्र शिव भएजस्तै शिवभित्र पनि शक्ति हुनुपर्छ । शिवको कल्याणकारी कुरामा यदि जीवन्तता छैन भने, शक्ति छैन भने त्यो पनि मुर्दातुल्य हुन्छ । त्यसकारण, हामीले शिव र शक्तिलाई संयुक्त गरेर आध्यात्मिक भावना र भौतिक भावनालाई सँगै लगेर, एउटै लाइनमा ल्याएर तिनीहरूलाई कल्याणकारी भावना अथवा आध्यात्मिक भावनाले निर्देशित गरेर त्यस लाइनमा हिँडाइदियौँ भने उज्यालोमा यात्रा गरी दुर्घटनाबाट बचेर गन्तव्यमा पुगेसरी हुन्छ । शक्ति प्राप्तिका लागि संसारमा अहिले अनेक किसिमका हातहतियारहरू, विनाशक वस्तुहरूको निर्माण भइरहेको छ । वस्तुहरूको निर्माणपछि उन्माद बढेर अत्यन्तै शोषण, अत्याचार, लुटपाट जे जति भइरहेका छन्, ती सबै शक्तिको दुरूपयोगबाट भएका हुन् । यसको अर्थ शक्तिमा शिव भएन । त्यसैले अकल्याण भयो समाजमा, अशान्ति छायो समाजमा । शक्ति त समाजको कल्याणको लागि हुनुपर्दछ, व्यक्तिगत फाइदाको लागि होइन शक्ति । शक्ति राष्ट्रको कल्याणको लागि, सबै प्राणीको हित, समुन्नतिका लागि हो भन्ने चिन्तन नहुँदा शिव र शक्तिको उपासना हुन सकेन । यसकारण, अहिले जगत् उत्पीडित भएको छ । यस्तो अवस्थामा आध्यात्मिक धारणाको विकास गरेर समाजलाई एउटा सचेत चेतनासहितको शक्ति हुनुपर्‍यो भनेर प्रेरित गर्नुपर्ने भइसकेको छ ।

'स्व' भनेको आफ्नै ठाउँ हो । उदाहरणका लागि समाजमा कुनै राष्ट्राध्यक्ष छन्, कुनै मन्त्री छन्, कुनै भाइ-भारदार छन्, कर्मचारी, शिक्षक छन्, पत्रकार र कृषक अनि व्यापारी छन्, कुनै दाजु, कुनै भाइ, कुनै आमा, कुनै बहिनी र कुनै भाइ-भतिज छन्, जो जो जहाँ जहाँ जुन जुन रूपमा छन्, त्यस त्यस ठाउँमा उनीहरूले गर्नुपर्ने कर्तव्य, दायित्वको बोध स्वस्थानी माताले गराउनुहुन्छ । आफ्नो ठाउँमा आफ्नो कर्तव्य पूरा नगर्दा अनेक विकृति फैलिएको छ । मानिसबाट आफ्नो जिम्मेवारी, आफ्नो शक्ति र समाजको कल्याणको लागि त्यसलाई परिचालित गर्ने चिन्तन, आफ्नो स्थानबाट आफूले गर्ने दायित्व पूरा भयो भने मात्र स्वस्थानी माताको सही उपासना भएको ठहरिन्छ । समाजलाई मैले के दिएँ, परिवारलाई के दिएँ र मानवप्रति आफ्नो कर्तव्य के हो र आफूले प्राप्त गर्नु मात्र हो कि वितरण पनि गर्ने भन्ने दोहोरो सोचाइ राख्ने क्षमताको विकास, त्यस्तो किसिमको बौद्धिकताको, आध्यात्मिकतको विकास स्वस्थानी माताको उपासनाबाट प्राप्त गर्नुपर्छ । यसैका लागि हामीले स्वस्थानीको उपासना गर्ने गर्दै आइरहेका हौं । सौभाग्यवश नेपालीहरूले स्वस्थानी मातामा बढी विश्वास गर्दछन् ।

शक्ति प्राप्तिका लागि संसारमा अहिले अनेक किसिमका हातहतियारहरू, विनाशक वस्तुहरूको निर्माण भइरहेको छ। वस्तुहरूको निर्माणपछि उन्माद बढेर अत्यन्तै शोषण, अत्याचार, लुटपाट जे जति भइरहेका छन्, ती सबै शक्तिको दुरुपयोगबाट भएका हुन्। यसको अर्थ शक्तिमा शिव भएन। त्यसैले अकल्याण भयो समाजमा, अशान्ति छायो समाजमा। शक्ति त समाजको कल्याणको लागि हुनुपर्दछ, व्यक्तिगत फाइदाको लागि होइन शक्ति।

आफ्नो ठाउँ कसैले पनि छोड्नु भएन । अहिले आ-आफ्नो पेशामा बसेकाहरूले ठाउँ छोडेर सीमा नाघे । स्वस्थानीको पूजा पनि गर्ने र सीमा पनि नाघ्ने र आफ्नो ठाउँ छोड्ने हो भने स्वस्थानी माताको पूजा त भएन । यो त देखावटी मात्र भयो । सबैले यो चेतना प्रसारित गर्नुपर्दछ कि आफ्नो ठाउँमा बसेर आफ्नो कर्तव्य पूरा गर्ने हो भने मात्र देवीदेवताहरूको उपासना हुन सक्छ । गीतामा पनि भगवान् कृष्णले 'मलाई खुशी पार्नका लागि भेटी चढाउने, नैवेद्य चढाउने अथवा अन्य कुनै पूजा गर्नेभन्दा पनि स्वकर्म गर, आफ्नो कर्मद्वारा त्यस परमेश्वरलाई पूजा गर, तिम्रो कर्तव्य के हो त्यसलाई पूरा गर, यसैबाट म खुशी हुन्छु, यसैबाट सिद्धि, सफलता प्राप्त हुन्छ भन्नुभएको छ । त्यसकारण, हाम्रा शास्त्रमा पनि यो भनिएको पाइन्छ कि मानिसको आयु सय वर्ष हो । तर कर्म नगरीकन सय वर्ष बाँच्न सकिँदैन । कर्मशील हुनुपर्‍यो, सक्रियताका साथ जीवन बिताउनुपर्‍यो । योगाभ्यास गरौँ, अनेक किसिमका दायित्वहरू पूरा गरौँ । जहाँ जहाँ बस्ने अवसर आउँछ त्यस त्यस ठाउँमा बसेर आफ्नो कर्तव्य पूरा गर्ने गरौँ, कर्म गरौँ, कर्म नगरेसम्म यसको मर्म पनि बुझ्दैनौँ । संसार पनि कर्म गर्न छोडेमा अर्को क्षणमा नष्ट हुन्छ ।

वास्तवमा देवीको उपासना गर्दा नगर्नेलाई भन्दा गर्नेलाई केही न केही फल त अवश्य प्राप्त होला तर त्यो देखासिकी भयो । विधिपूर्वक नियमपूर्वक गरियो भने त्यसले राम्रो फल पाइन्छ । तर अहिले हाम्रो समाजमा विकृति बढेको छ । स्वस्थानीको पूजा गर्‍यो, उहाँलाई कोठामा थुनिदियो, बाहिर गएर छलछाम गर्‍यो, कर्तव्य पूरा गरेन, समाजलाई धोका दिँदा समाज विकृत भएको हो । त्यसैले आज हामीमा भएका विकृतिहरू अर्थात् स्वार्थी भावनाहरूलाई सीमाभित्र राख्नुपर्‍यो । आफ्नो लक्ष्य र प्राप्ति स्पष्ट हुनुपर्‍यो । अहिले मानिसले एउटा रूप समाजको अगाडि देखाउँछन् भने भित्र अर्कै रूप लिएर बसेका हुन्छन् । नाफाखोरी, कमिशनखोरीले प्रश्रय पाएको छ । यसरी समाज भ्रष्ट भएको छ ।

समाजमा श्रीस्वस्थानी माताको व्रतोपासनाको जुन कुरा छ, त्यो केवल देखावटीरूपमा मात्र भइरहेको छ । देखावटीले गर्दा पनि केही अंशसम्म उनीहरूलाई पुण्य मिलेको होला । तर स्वस्थानीको उपासनाको अर्थ त आ-आफ्नो स्थानमा बसेर सबैले आफ्नो आफ्नो कर्तव्य पूरा गर्नु हो । कर्तव्य पूरा भएपछि मात्र भगवतीको आशीर्वाद, कृपा, अनुकम्पा मिल्दछ र जीवन सफल हुन्छ भन्ने स्वस्थानी उपासनाको मर्म हो । हामीमा कमी, कमजोरी छन् भने त्यसमा सुधार पनि हुनुपर्दछ ।

स्वस्थानी व्रतकथामा कार्तिकेयको उत्पत्तिको प्रसंग आउँछ । शिव र पार्वती एक ठाउँमा लीन हुनुहुन्थ्यो । वायुको सहायताले अग्नि त्यस स्थानमा प्रवेश गरे । त्यसपछि अग्निले वीर्यदान पाए । अग्नि प्रकाशतत्त्व हो, चेतन तत्त्व हो, चिन्तन हो, व्यापक विश्वको हित, समुन्नति, कल्याणको चिन्तन हो, त्यो चिन्तन सबैभन्दा पहिले शिव र शक्तिकहाँ पुग्नुपर्‍यो । शिव र शक्तिलाई प्राप्त गर्ने हो भने पहिले त्यो चिन्तन उठ्नुपर्‍यो । अग्निमा त्यो शक्ति दिनुभयो उहाँले । अग्निले त्यसलाई छ प्रकारले बाँडे । पृथ्वी, अग्नि, तेज, वायु, आकाशका साथसाथै चेतन पक्षलाई थपेर बाँडे । यिनै छ वस्तु स्वामी कार्तिकेयको रूपमा उत्पन्न भए । यिनले आसुरी शक्तिमाथि विजय प्राप्त गरे । त्यसकारण पाँचवटा महातत्त्वसँगसँगै चेतना पनि चाहिने रहेछ । खालि पाँच महाभूत मात्र भएर भएन, चेतना पनि चाहियो । यही चैतन्यता आध्यात्मिक चेतना हो । यसको विकास गराउनको लागि, मानिसभित्र यसको जागरणका लागि स्वस्थानीको उपासना गर्नुपर्दछ, शिवको उपासना पनि सँगै गर्नुपर्दछ किनभने स्वयं भगवतीले भन्नुभएको छ कि शिवका साथमा स्वस्थानीको पूजा गर । तिमीले जे आफ्नो ठाउँबाट गर्छौ त्यसमा कल्याणको पनि चेतना राख । वस्तुको दुरूपयोग नगर, सदुपयोग गर भन्ने शिव चेतना हो र यस चेतनाका साथ शक्ति हुनुपर्‍यो । आज संसारमा शक्तिशाली राष्ट्रहरूले त्यो शिवत्व गुमाएका छन् । जताततै सत्ता प्राप्त गर्ने होड मात्रै चलेको छ, कल्याणको भावना छैन । यसले गर्दा यहाँ अशान्ति मच्चिएको छ ।

शिव र शक्तिको संयुक्त उपासना हो स्वस्थानी उपासना, आध्यात्मिकता र भौतिकताको संयुक्त उपासना हो स्वस्थानी उपासना जसलाई वेदले विद्या र अविद्याको रूपमा परिभाषित गरेको छ । जसले विद्या र अविद्यालाई जान्यो त्यो अविद्याद्वारा हुने दुर्घटनाबाट बच्न सक्छ र विद्याद्वारा मुक्त हुन सक्छ ।

*(प्रा. डा. ऋषिराम पोखरेलज्यूसँगको कुराकानीमा आधारित)*

# संक्षेपमा श्रीस्वस्थानी-व्रतकथा

श्रीस्कन्दपुराणको केदारखण्डको माघमाहात्म्यमा कुमार-अगस्त्य सम्वादमा श्रीस्वस्थानी परमेश्वरीको व्रतकथाका विभिन्न प्रसंगहरू पाइन्छन् । पौषशुक्ल पूर्णिमादेखि माघशुक्ल पूर्णिमासम्म एक महिनासम्म हिन्दुहरूको घर-घरमा श्रीस्वस्थानी व्रतकथा भन्ने प्रचलन रहेको छ । अत्यन्तै प्रसिद्ध श्रीस्वस्थानी व्रतकथाको पहिलो अध्यायमा सृष्टि उत्पत्तिको वर्णन रहेको छ । सृष्टिक्रमको वर्णन गर्दै यस अध्यायमा भनिएको छ– शान्त्यतीत पदबाट शक्ति उत्पन्न भयो, त्यसपछि शक्तिमान् अर्थात् शिवदेखि मायाको उत्पत्ति भयो, मायादेखि पर अव्यक्त प्रकृति उत्पन्न भयो । प्रथम अध्यायमा प्रथम उत्पन्न शक्तिदेखि पर शान्त्यतीत पद, त्यसभन्दा पर शान्ति पद, शान्तिदेखि पर विद्या पद, त्यसभन्दा पर प्रतिष्ठा पद र त्यसभन्दा पर निवृत्ति पद जनाइएको छ । यसमा जसरी सृष्टिक्रम हुन्छ, त्यसरी उल्टो रीतिले विनाश हुन्छ भनिएको छ । यो सबै जगत् पूर्वोक्त क्रमले उत्पन्न भई अव्यक्तबाट प्रकट हुन्छ, प्रलयकालमा उल्टो गुणको पनि सम र विषम उत्पन्न हुन्छ । गुणका साम्य, लय र विषमतामा सृष्टि हुन्छ । यही ब्रह्माको कारणले ब्रह्माण्ड हुन्छ । प्रलयको अर्थात् संहारको समयसम्ममा ब्रह्माको १ सय वर्ष व्यतीत हुन्छ र यही अव्यक्त जन्म ब्रह्माको आयुको क्रम हो, जुन ब्रह्माको आयुको आधा भाग छ त्यसैलाई परार्द्ध भनिन्छ । दुई परार्द्ध व्यतीत हुँदा ब्रह्माको आयु सिद्धिन्छ । यस अध्यायमा कसरी पाँच ज्ञानेन्द्रिय र पाँच कर्मेन्द्रियहरूको उत्पत्ति भयो र पञ्चमहाभूतहरूको उत्पत्ति भई चराचर जगत्को उत्पत्ति भयो भन्ने प्रसंग पाइन्छ ।

त्यस्तै, द्वितीय अध्यायमा परब्रह्मस्वरूप विष्णुका नाभिदेखि सहस्रदल कमल उत्पन्न भएको र त्यसै कमलमा ब्रह्मा उत्पन्न भएको वर्णन पाइन्छ । परब्रह्मले उनको भक्तिदेखि प्रसन्न भई उनलाई मोह नाशको आशीर्वाद दिनुभयो । मोहनिशा भगवत्कृपाले उनले सृष्टिको प्रारम्भ गरे । विष्णुको कानेगुजीबाट अत्यन्तै पराक्रमी मधु र कैटभ दैत्यको उत्पत्ति भयो । श्रीविष्णुले ती दुई दैत्यसँग ५ हजार वर्षसम्म जलमा युद्ध गरे तर पनि जित्न सकेनन् । पछि युक्तिपूर्वक मधु-कैटभलाई मारेपछि उनीहरूको शरीरका बोसो, मासु, हाड पृथ्वीमा विभिन्न रूपमा रूपान्तरण भयो । त्यसपछि ब्रह्माले सृष्टिको प्रारम्भ गरी पहिले चतुर्दश भुवनको सृष्टि गरेको वर्णन यस अध्यायमा छ । भुवन, पाताल, पर्वत, द्वीप, समुद्र सृष्टि गरिसकेर प्राणीको सृष्टिका लागि ब्रह्माले महादेवसँग वरदान मागेको र पछि सुमेरु पर्वतमा गई शिवलोक, विष्णुलोक, ब्रह्मलोक, उमालोक, स्कन्दलोकजस्ता नाना लोकको सृष्टि गरेको प्रसंग यस अध्यायमा आउँछ । सुमेरु पर्वतका विभिन्न दिशा र कोणमा पनि विभिन्न लोकको सृष्टि गरी स्थावर जंगमको सृष्टि गरेपछि प्राणीको सृष्टि भएको प्रसंग पनि यस अध्यायमा पाइन्छ ।

तेस्रो अध्यायमा भने दक्षप्रजापति र उनका तेत्तीसकोटि कन्याहरूको प्रसंग पाइन्छ । सतीदेवीबाहेक ती तेत्तीसकोटि कन्याहरूको तेत्तीसकोटि देवताहरूसँग भएको विवाह प्रसंग र श्रीमहादेव दक्षप्रजापतिबाट अपमानित हुनुभएको र पछि छल गरेर श्रीविष्णुले श्रीमहादेवसँग सतीदेवीको कन्यादान गराउने वाचा गरेको प्रसंग आउँछ ।

चौथो अध्यायमा श्रीविष्णुले आफ्नो वाचानुसार सतीदेवीको हात छलपूर्वक वृद्ध संन्यासीरूपी श्रीमहादेवको हातमा पार्छन्, विवाहपछि श्रीमहादेव र सतीदेवी विदा भई

*महादेव सतीदेवी विवाह*

आफ्नो घरतिर लाग्नुहुन्छ । सतीदेवीलाई कैलाशको दर्शन गराई आफू वृद्ध संन्यासीको रूपमा जगत्पति विश्वम्भर भएको वास्तविकता पनि उजागर हुन्छ यस अध्यायमा ।

मय, तारकासुर र विद्युत्प्रभ दैत्य हिरण्याक्षको वधपछि अति व्यथित भएर तपस्यामा लीन भएको र ब्रह्माजीसँग अवध्यत्त्व वरदान मागेको प्रसंग पाँचौं अध्यायमा गरिएको छ। दानवहरूबाट त्रिपुर निर्माण र फलामको पुर तारकासुरलाई, चाँदीको विद्युत्प्रभलाई हस्तान्तरण र सुनको उत्तम पुर मय स्वयंले लिएको प्रसंग यस अध्यायमा पाइन्छ ।

देवताहरू दानवहरूबाट सताइएपछि श्रीमहादेवको शरणमा परेपश्चात् श्रीमहादेवबाट देवताहरूलाई उहाँको १ अंश धारण गरी रुद्रतेजोमय रूप भई दानवहरूलाई नष्ट गर्ने सल्लाह, रुद्रतेजोमय रूप लिन नसक्ने देवताहरूको भनाइपछि श्रीमहादेव आफैले त्रिपुर भस्म गर्ने आश्वासन, विश्वकर्माद्वारा सुवर्णमय रथको निर्माणपछि श्रीमहादेवको रथारोहण, नारदद्वारा दैत्यहरूलाई युद्धका लागि उत्प्रेरणा प्रदान, देवासुर संग्रामको भीषण वर्णन, त्रिपुर दहनपछि श्रीमहादेवको कैलाश गमन र देवताहरूको विदाइको वर्णन यस अध्यायमा पाइन्छ ।

छैटौं अध्यायमा दक्षप्रजापतिद्वारा अश्वमेध यज्ञ, श्रीमहादेव र सतीदेवीबाहेक सबैलाई आमन्त्रण, श्रीमहादेवको तिरस्कार, शिवको निन्दा सुन्न नसकी सतीदेवीद्वारा यज्ञकुण्डमा प्रवेश गरी आत्मदाहको प्रसंग पाइन्छ ।

सातौं अध्यायमा दक्षले आयोजना गरेको यज्ञको विध्वंश,

*दक्षयज्ञमा नजान सतीदेवीलाई महादेवबाट सल्लाह*

*सतीदेवीद्वारा आत्मदाह*

पृथ्वीमा उत्पात, शिव सेना र विष्णुप्रभृति तेत्तीसकोटि देवता, यक्ष, गन्धर्व, किन्नरसँग दैत्यहरूको भीषण युद्धको प्रसंग आउँछ ।

दक्षसेनाको विध्वंशपछि श्रीमहादेवको पृथ्वी भ्रमणको प्रसंग आठौं अध्यायमा आउँछ । यस अध्यायमा वीरभद्रद्वारा दक्षप्रजापतिको शिरोच्छेदनपश्चात् यज्ञमा शिरको आहुति, विरणी र अन्य देवताहरूको स्तुतिबाट प्रसन्न भएर दक्षप्रजापतिको मृत शरीरमा बोकाको टाउको जोडेर वीरभद्रद्वारा उनलाई प्राणदान दिइएको, श्रीमहादेवद्वारा शोकग्रस्त अवस्थामा भएको पृथ्वी भ्रमणको प्रसंग यस अध्यायमा आउँछ ।

सतीदेवीको शरीर पतनपछि पीठहरूको उत्पत्ति प्रसंग नवौं र दसौं अध्यायमा पाइन्छ । यी अध्यायहरूमा श्रीमहादेव व्याकुल र शोकाकुल भई सतीदेवीको शरीर बोकी हिँड्नुभएको देखी विष्णुले मायाद्वारा माखाको उत्पत्ति गराई सतीदेवीको शरीरलाई गलाउनुभएको अनि शरीर गलेर जहाँ जहाँ अङ्गादि पतन भए त्यहाँ त्यहाँ शक्तिपीठहरूको उत्पत्ति भएको प्रसङ्गको वर्णन छ ।

*महादेवबाट वीरभद्रको उत्पत्ति*

एघारौँ अध्यायमा भने श्री महादेव बहुलाफैँ बेहोसी भएर जतातते बरालिनुभएको अवसर पारेर तारकासुरद्वारा युद्धको घोषणा, इन्द्रसहित सम्पूर्ण देवताहरू स्वर्गबाट भागेर मृगस्थलीमा आएर बस्दा श्रीमहादेवको आगमन भएको प्रसंग आउँछ ।

बाह्रौँ अध्यायमा ऋषिपत्नीहरू श्रीमहादेवको पछि लागेको र ऋषिहरूद्वारा श्रीमहादेवलाई श्राप, श्रीमहादेवको लिङ्ग पतन, श्रीमहादेवद्वारा ऋषिहरूलाई पनि श्राप दिइएको, मेनकाको गर्भबाट पार्वतीको जन्म, श्रीमहादेवलाई पतिरूपमा पाउनको लागि वनमा गई पार्वतीद्वारा गरिएको कठोर तपस्या, शिवजीबाट पार्वतीको परीक्षा, श्रीविष्णुद्वारा श्रीस्वस्थानी माताको व्रतविधिको बारेमा पार्वतीलाई बताउनुभएका कुराहरू छन् ।

तेह्रौँ अध्यायमा पार्वतीले विधिअनुसार श्रीस्वस्थानी माताको व्रत बसेको, इन्द्रद्वारा कामदेवलाई श्रीमहादेवको तपस्या भङ्ग गर्ने आदेश, कामदेव भस्म भएपछि रतिको विलापका प्रसंग पाइन्छन् । त्यस्तै, हिमालय पर्वतद्वारा सुपुत्री पार्वतीको कन्यादान र श्रीमहादेव हिमालयका ज्वाइँ बनेको प्रसंग पनि यस अध्यायमा पाइन्छ ।

पार्वतीले अश्वत्थामा ऋषिलाई रसातलमा पठाउनुभएको र श्रीविष्णुद्वारा बताइएको विधिबाट नै श्रीस्वस्थानीको व्रत गराउने र दुःखीहरूको दुःख नाश गर्ने आदेश दिनुभएको प्रसंग, श्रीमहादेवले श्लेष्मान्तक वनमा किराँतीको रूप लिई शिकार खेलिरहँदा पार्वतीले पनि किराँतिनी भई छल गर्नुभएको, किराँतेश्वर शिवलिङ्ग भई श्रीमहादेव बस्नुभई अन्त्यमा शिव र पार्वतीको कैलाश प्रवेश भएको वर्णन चौधौँ अध्यायमा पाइन्छ ।

पन्ध्रौँ अध्यायमा श्रीमहादेवद्वारा पार्वतीपुत्रको शिर छेदन, शरीरमा हात्तीको टाउको जोडेर पुनः जीवित तुल्याएर गणेशको नाम प्रदान, श्रीमहादेवबाट वीर्यदान पाएपछि अग्निको गर्भ रहनुका साथै वीर्यको प्रतापबाट षट्वक्त्र कुमारको उत्पत्तिप्रसंग पाइन्छ । श्रीमहादेवद्वारा गणेशलाई वरदान प्रदान, गंगाद्वारा भएको श्रीस्वस्थानी माताको व्रत, पेचीमुनिद्वारा तारकासुरलाई ब्रह्माको तपस्या गर्ने उपदेश र ब्रह्माले तारकासुरलाई ब्रह्मास्त्रसहित दिनुभएको वरदान, तारकासुर र देवताहरूको १० हजार वर्षसम्म भएको अघोर युद्ध, मरेका दैत्यहरू संजीवनी मन्त्रद्वारा पुनः जीवित भई युद्ध गर्दा पनि कुमारद्वारा तारकासुरको वधजस्ता प्रसंग पनि यस अध्यायमा रहेका छन् ।

श्रीविष्णुको मानसरोवर गमन सोह्रौँ अध्यायमा पाइन्छ । यसबाहेक वाग्मतीको छेउमा पार्वतीद्वारा तपस्या, महादेवद्वारा मृगको रूपमा वन विहार गर्नु, मृगरूपी श्रीमहादेवको

*बोकाको टाउको जोडिएपछि दक्षद्वारा महादेवसमक्ष प्रार्थना*

सिंग तीन टुक्रा भई टुक्रिनु र श्रीमहादेवले ब्रह्मा, विष्णु र देवराज इन्द्रलाई टुक्रिएका तीनवटा सिंगलाई इन्द्रलोक, गोकर्ण र पातालमा लगेर स्थापनाको आदेश दिनु, रावण गोकर्णमा आई श्रीमहादेवको तपस्या गर्नु र श्रीमहादेवबाट पार्वती दानको रूपमा पाउनु, श्रीविष्णुले रावणलाई छल गरेको प्रसंग यसमा पाइन्छन् ।

सत्रौं अध्यायमा वृन्दाको सतित्व हरण गर्न गएका विष्णु कैदमा पर्नु, जालन्धर दानवविरुद्ध युद्ध, युद्ध जित्न श्रीविष्णुद्वारा वृन्दाको पतिव्रता धर्म नष्ट भएको प्रसंग पाइन्छ ।

अठारौँ अध्याय वृन्दाको सतित्व हरणपछि जालन्धर बलहीन हुन पुग्नु, श्रीमहादेवद्वारा उनको वध, वृन्दाले विष्णुलाई श्राप दिएर प्राण छोड्नुजस्ता प्रसंगले भरिएका छन् भने अश्वत्थामा सप्त पातालको मूल रसातलमा पुगी शंखचूड नागकी स्त्री हीरावती, रत्नचूड नागकी स्त्री रत्नावती, कृपादत्त नागकी स्त्री मृगावतीलाई श्रीस्वस्थानी माताको विधिसहित व्रत बसाउनु र श्रीस्वस्थानी माताको नागिनीहरूलाई प्रत्यक्ष दर्शन प्राप्त भएका प्रसंगहरू पाइन्छन् ।

उन्नाइसौं अध्यायमा शिवभट्ट ब्राह्मणको प्रसंग आउँछ। शिवभट्टलाई गणेशको वरदान प्राप्ति, दानधर्मद्वारा शिवभट्ट ब्राह्मणको सम्पत्तिमा उत्तरोत्तर वृद्धि र पुनः भगवान् गणेशको कृपाद्वारा छोरी गोमाको प्राप्ति, श्रीमहादेवद्वारा गोमालाई श्राप दिइएका प्रसंगहरू पनि यस अध्यायमा पाइन्छन् ।

बीसौँ अध्यायमा शिवशर्मा ब्राह्मणलाई गोमाको कन्यादान गरेको प्रसंग आउँछ भने एक्काइसौँ अध्यायमा शिवशर्मा ब्राह्मण र गोमा आफ्नो घर फर्केको प्रसंग आउँछ । त्यस्तै, बाइसौँ अध्यायमा शिवभट्ट ब्राह्मण र सती ब्राह्मणी रुखबाट खसेर मर्नु, गोमा ब्राह्मणीका गरगहना चोरी हुनु, शिवशर्मा ब्राह्मण भिक्षाटनका लागि परदेश जानु र त्यहाँ रुखबाट खसी मर्नु, गोमाको गर्भबाट राजलक्षणले युक्त नवराज जन्मनु र उनको विवाह अग्निस्वामीकी पुत्री चन्द्रावतीसँग हुनु र बाबुको खबर लिन उनी विदेशिनु, पिताको हाडखोर बटुली अन्त्यसंकार गरेको प्रसंग पाइन्छ ।

तेइसौँ अध्यायमा नवराजकी स्त्री चन्द्रावती माइत जानु, पार्वतीको आज्ञा पाई सप्तर्षिहरूले गोमा ब्राह्मणीलाई श्रीस्वस्थानी माताको व्रत गर्ने उपदेश दिएको प्रसंग आउँछ ।

चौबीसौँ अध्यायमा गोमाद्वारा श्रीस्वस्थानीको व्रतारम्भ, व्रतको प्रभावले नवराजको आगमन र उनलाई श्रीस्वस्थानी माताको महिमा सुनाउनु, हरिहरले नवराजलाई राजा भएस् भनी आशीर्वाद दिएको प्रसंग आउँछ ।

पच्चीसौँ अध्यायमा लावण्य देशको राजा छनौटमा हात्तीले नवराजको गलामा माला लाइदिनु, लावण्यवतीसँग नवराजको विवाह हुनु र नवराज र लावण्यवती रानीको विधिपूर्वक राज्याभिषेकको प्रसंग पाइन्छ ।

अध्याय छब्बीसमा नवराजकी ज्येष्ठ स्त्री चन्द्रावतीलाई डोलेहरूले माइतबाट फर्काई ल्याउँदै गरेको, अप्सराहरूबाट भइरहेको श्रीस्वस्थानी माताको पूजनमा डोलेहरूले भाग लिएको प्रसंग आउँछ भने अध्याय सत्ताईसमा डोलेहरूको हातबाट श्रीस्वस्थानीको प्रसाद खोसेर चन्द्रावतीले मिल्काएको, श्रीस्वस्थानी परमेश्वरीको निन्दा गरेकीले चन्द्रावती शाली नदीमा खसेको, महापातकी भई घोर यातना पाएको र ब्राह्मण भोजनको वर्णन पाइन्छ ।

अठ्ठाइसौँ अध्यायमा भने अप्सराहरूको उपदेशानुसार चन्द्रावतीले पौषशुक्ल पूर्णिमाको दिनदेखि श्रीस्वस्थानी माताको व्रत बसेको, व्रतको प्रभावले उनको पाप घट्दै गएको, माघशुक्ल पूर्णिमाका दिन चन्द्रावतीले शाली नदीबाट बालुवा ल्याएर सामग्री तयार गरेको, बालुवाको सामग्री सिद्ध भइगएको, पुण्यवतीको रूपमा चन्द्रावतीको रूपान्तरणको प्रसंग आउँछ भने अध्याय उनान्तीसमा चन्द्रावतीलाई नाग जोडीले आशीष दिएको, श्रीस्वस्थानी माताको कृपाले नवराजसँग चन्द्रावतीको भेट भई उनले राजगृह प्रवेश गरेको प्रसंग आउँछ ।

अध्याय तीसमा चन्द्रावतीले श्रीस्वस्थानी मातालाई नाना तरहले निन्दा गरेकी र माताको प्रसाद थुकेर फ्यालेकी हुनाले आफ्नो पतित अवस्था भएको, अप्सराहरूको परामर्शबाट श्रीस्वस्थानी माताको व्रतोपसना गरेपछि आफ्नो पतित अवस्थामा आएको सुधार, उन्नति, प्रगतिको जानकारी नवराजलाई दिएको प्रसंग छ भने अन्तिम अध्यायमा गोमा ब्राह्मणीले आफ्नो दुःखित अवस्थामा सप्तर्षिबाट पाएको उपदेशानुसार श्रीस्वस्थानी माताको व्रत बस्नाले आफ्नो दुःख नाश भएको, व्रतको प्रतापले पुत्र विदेशबाट फर्केर आएको, हरिहरले नवराजलाई वरदान दिएको कुरा गोमाले चन्द्रावतीलाई बताएको प्रसंग आउँछ । व्रतकथाका अनुसार अन्तमा लावण्य देशको रानी भएर चन्द्रावती र लावण्यवती श्रीस्वस्थानी माताको श्रीचरणकमलमा आफ्नो चित्त लगाई सदा आनन्दमा लीन भइरहे । जय गुरुदेव ।

# संक्षिप्त श्रीस्वस्थानी पूजाविधि

पौष शुक्ल पूर्णिमादेखि माघ शुक्ल पूर्णिमासम्म घरघरमा श्रीस्वस्थानी माताको पूजा गर्ने, व्रत बस्ने अनि साँझमा कथा सुन्ने परम्परा धेरै पुरानो छ । यसमा एक महिनासम्म श्रीमहादेव तथा श्रीस्वस्थानी माताको पूजा, आराधना, उपासना गरिसकेपछि अन्तिम दिन अर्थात् माघ शुक्ल पूर्णिमाको दिन विशेष विधिविधानसहित श्रीस्वस्थानी माताको पूजा गर्नुपर्दछ। उक्त दिन संकल्प गरी दीयो, कलश, गणेश एवं अन्य सम्बन्धित देवदेवी, अप्सरा आदिको पूजन गरिसकेपछि तलको मूल पूजा शुरु गर्न सकिनेछ ।

### ध्यान

चन्दन, अक्षता, फूल लिएर हात जोड्ने ।

**सुवर्णवर्णदीप्ताभां त्रिनेत्रां कमलासनाम् ।**
**सिंहासने समासीनां सर्वालङ्कारभूषिताम् ।।**
**नीलोत्पलनाभ्यां वामे दक्षिणे वरदाभयाम् ।**
**खड्गचर्मधरां चोर्ध्वे वामदक्षिणयोःक्रमात् ।।**
**चतुर्भुजां च मां तत्र पूजयेत् वृषकेतनाम् ।।**
**एवं ध्यायेत् महादेवीं स्वस्थानी जगदीश्वरीम् ।**

### आवाहन

पुनः चन्दन, अक्षता, फूल लिएर श्रीस्वस्थानी मातालाई आवाहन गर्ने ।

**स्वस्थानी इहागच्छ इह तिष्ठ यावत् पूजां करोमि**
**तावत् त्वं सुस्थिरा भव ।**
**इदं आवाहनादिपुष्पं त्रैलोक्यचिन्तामण्यै नमः ।**
**चण्डमुण्डप्रमथिन्यै नमः । स्वस्थान्यै नमः ।**
**जयायै नमः । अजितायै नमः ।**
**आवाह्य भक्त्या देवेशि पूजयामि यथाविधि ।**
**मम पूजां प्रतीच्छ त्वं स्वस्थानि परमेश्वरी ।।**

### दूर्वाक्षत

दूबो र अक्षता चढाउनुहोस् ।

**दूर्वाक्षतम् समायुक्तमष्टाष्ट च प्रयोजनम् ।**
**गृह्यतां परमेशानि भुक्तिमुक्ति फलप्रदे ।।**

### कमल

माता श्रीस्वस्थानीलाई कमलको फूल अर्पण गर्नुहोस् ।

**पद्मं च सरसि जातं लक्ष्मीवासगृहं शुभम् ।।**
**गृह्यतां श्रीजगन्नाथ स्वस्थानि वा प्रसीद मे ।**

### नीलोत्पल

निम्न मन्त्र उच्चारणका साथ नीलोत्पल चढाउनुहोस् ।

**नीलोत्पलदलं दिव्यं शिवसर्वादिसंयुतम् ।**
**स्वस्थानी परमेशानि गृह्यतां च सितोत्पलम् ।**

### दमन

तलको मन्त्र उच्चारणका साथ दमन अर्पण गर्नुहोस् ।

**कृतोदयं भस्मसंज्ञं सर्वदेवप्रियङ्करम् ।।**
**गृह्यतां मे महादेवि रमय त्वं च वल्लभम् ।**

### सूत्र

मातालाई निम्न मन्त्रका साथ सूत्र अर्पण गर्नुहोस् ।

**नवतन्तु समादाय कर्पाससुमनोहरम् ।।**
**सर्वपापविनाशाय स्वस्थान्यै तन्निवेदयेत् ।**

### धूप

निम्न मन्त्रको उच्चारण गर्दै मातालाई धूप बालेर अर्पण गर्नुहोस् ।

**वनस्पतिरसोत्पन्नो नाना गन्धेन संयुतः ।।**
**आघ्रेयः सर्वदेवानां धूपोऽयं प्रतिगृह्यताम् ।।**

### दीप

धूपपश्चात् दीप अर्थात् दीयो बालेर माता श्रीस्वस्थानीलाई अर्पण गर्नुहोस् ।

**सुप्रकाशं महादीपं सर्वत्र तिमिरापहम् ।।**
**सबाह्याभ्यन्तरंज्योतिर्दीपोऽयंप्रति गृह्यताम् ।।**

### नैवेद्य

धूप एवं दीपपश्चात् माता श्रीस्वस्थानीलाई घिउमा पकाएको नैवेद्य अर्पण गर्नुहोस् ।

**नैवेद्यं गिरिजे पूतं गृह्यतां परमेश्वरि ।।**
**घृतशर्करया युक्तं प्रदत्तमिदमीश्वरि ।।**

### पुनराचमन

नैवेद्य अर्पण गरेपश्चात् मातालाई पुनः आचमन गराउनुहोस् ।

**ॐ नमः शंभवाय च मयोभवाय च नमः शंकराय च**
**मयस्कराय च नमः शिवाय च शिवतराय च ।।**

### फल

यसपश्चात् माता श्रीस्वस्थानीलाई विविध प्रकारका फल अर्पण गर्नुहोस् ।

**फलान्नंविविधाकारं कदलीपनसादिकम् ।।**
**इक्ष्वादियुक्तं सरसं गृह्यतां परमेश्वरि ।।**

## अक्षता

अब निम्न मन्त्रका साथ १०८ अक्षता माता श्रीस्वस्थानीलाई चढाउनुहोस् ।

**ॐ अक्षन्नमीमदन्त ह्यवप्रिया अधूषत अस्तोषत**
**स्वभानवो विप्रान विष्टयामतिः । योजान्‌, इन्द्र ते हरी ।।**

## यज्ञसूत्र

यसपछि निम्न मन्त्रका साथ १०८ यज्ञसूत्र मातालाई अर्पण गर्नुहोस् ।

**ॐ नाभ्या आसीदन्तरिक्ष (गूं) शीर्ष्णोद्यौः समवर्तत ।**
**पद्भ्यां भूमिर्दिशः श्रोत्रात्तथालोकान्‌ अकल्पयन्‌ ।**

## कुन्दपुष्प

अब निम्न मन्त्रसँगै माता श्रीस्वस्थानीलाई १०८ कुन्दपुष्प अर्पण गर्नुहोस् ।

**ॐ श्रीश्चते लक्ष्मीश्च पत्न्या बहोरात्रे**
**पार्श्वे नक्षत्राणि रुपमाश्विनौ न्यात्तम्‌ ।**
**इष्णन्निषाणामं मईषाण सर्वलोकम्‌ ईषाण ।**

## ताम्बूल

यसपछि निम्न मन्त्रका साथ १०८ पान मातालाई अर्पण गर्नुहोस् ।

**ॐ यत्‌ पुरुषेण हविषादेवा यज्ञमतन्वता**
**वसन्तोऽस्यासीदाज्यं ग्रीष्मः इध्मः शरद्धविः ।**

## लवंगादि सुगन्धि द्रव्यम्

अब निम्न मन्त्रका साथ १०८ सुगन्धि द्रव्य माता श्रीस्वस्थानीलाई चढाउनुहोस् ।

**ॐ चन्दनागरुकर्पूर कुंकुमं रोचनं तथा कस्तूर्यादि**
**सुगन्धांश्च सर्वाङ्गेषु विलेपनम्‌ ते नमः ।**

## उपायनम् (भेटी वा दक्षिणा)

अब निम्न मन्त्रसँगै माता श्रीस्वस्थानीलाई १०८ दक्षिणा अर्पण गर्नुहोस् ।

**ॐ हिरण्यगर्भ गर्भस्थं हेम बीजं विभावसोः ।**
**अनन्तपुण्यफलद मतः शान्तिं प्रयच्छमे ।**

## प्रदक्षिणा

अब निम्न मन्त्रसँगै माता श्रीस्वस्थानीलाई १०८ पटक प्रदक्षिणा गर्नुहोस् ।

**यानि कानि च पापानि जन्मान्तरकृतानि च**
**तानि सर्वाणि नश्यन्तु प्रदक्षिणात्‌ पदे पदे ।**

## नीराजनम्

यसपछि निम्न मन्त्रसँगै माता श्रीस्वस्थानीलाई १०८ नीराजन अर्पण गर्नुहोस् ।

**घृतवर्त्तिसमायुक्तं वह्निना ज्वलितं मया ।**
**आरार्तिक्यं प्रयच्छामि गृहाण परमेश्वरि ।**

## जप

माता श्रीस्वस्थानीको मन्त्र १०८ जप गरिसकेपछि त्यो जप उहाँमा नै समर्पण गर्नुहोस् ।

**गुह्यातिगुह्य गोप्त्री त्वं गृहाणास्मत्कृतं जपम्‌ ।**
**सिद्धिर्भवतु मे देवि ! त्वत्प्रसादात्‌ महेश्वरि ।।**

## पुष्पाञ्जलि

यसपश्चात्‌ माता श्रीस्वस्थानीलाई विभिन्न फूलसहित पुष्पाञ्जलि अर्पण गर्नुहोस् ।

**नाना विधानि पुष्पाणि ऋतुकालोद्भवानि च**
**अर्पितानि मया भक्त्या गृहाण परमेश्वरि ।**

## नमस्कार

अब केवल माता हजूर नै मेरो आश्रय हुनुहुन्छ भनी दुवै हात जोडी निम्न मन्त्र वाचन गर्नुहोस् ।

**नमोऽस्तु ते महादेवी स्वस्थानि परमेश्वरी ।।**
**त्रिलोक जननि र्नित्ये सत्वानां पापहारिणी ।।**
**त्रिपुरघ्न महादेव भक्तवत्सल विश्वकृत्‌ ।।**
**नमस्करोमि देवेश ब्रह्ममाधववन्दित ।।**
**अन्यत्र शरणं नास्ति युवां वै शरणं मम ।।**
**तस्मात्कारुण्यभावेन रक्षताम्‌ परमेश्वरौ ।।**

## अर्घ्य

अन्त्यमा शंखजलमा चन्दन, फल एवं फूलसहित अर्घ्य चढाउनुहोस् ।

**स्वस्थानि देवि देवेशि पूर्णार्थ मम तारकम्‌ ।**
**गृहाणार्घ्य मया दत्तं प्रसीद परमेश्वरि ।।**
**शंखतोयं समादाय सपुष्पफलचन्दनम्‌ ।।**
**जानुभ्यां धरणीं स्पृष्ट्वा अर्घ्योयं प्रति गृह्यताम्‌ ।**

## विसर्जन

पूजन कर्मको लागि आउनुभएका सम्पूर्ण देवदेवीलाई आ-आफ्नो स्थानमा फर्कनको लागि निम्न मन्त्रसहित अनुरोध गर्दै पूजा विसर्जन गर्नुहोस् ।

**यान्तुदेवगणाः सर्वे पूजामादाय माम कीम्‌ ।**
**इष्टकामप्रसिध्यर्थ पुनरागमनाय च ।।**

अन्त्यमा ब्राह्मणलाई टीका लगाएर दक्षिणा दिई पूजा समापन गर्नुहोस् । जय गुरुदेव ।

# किराँतेश्वर शिवलिङ्ग र गौरीघाट

गौरीघाट पशुपतिबाट गुह्येश्वरी मन्दिर जाने बाटो (पीच रोड) मा वाग्मतीको पुलको मुनि वाग्मती नदीकिनारमै पर्दछ भने किराँतेश्वर शिवलिंग वाग्मतीको अर्को किनार तर्फको डाँडाँको टुप्पामा रहेको छ । गौरीघाटमा एक ठूलो शिला छ, त्यस शिलामा विभिन्न आकृतिहरू छन्, त्यसैलाई नै गौरीको प्रतीक मानी पूजा गरिन्छ। किराँतेश्वर शिवलिंग भने चारैतिर पर्खालले घेरेको ठाउँको बीचमा खुला आकाशमुनि केही लामो केही टेढो ठडिएको शिलाको रूपमा अवस्थित छ । यस सम्बन्धमा स्कन्दपुराणको माघ माहात्म्यअन्तर्गत श्रीस्वस्थानी व्रतकथामा निम्न बमोजिम उल्लेख गरिएको छ ।

एकदिन महादेव सुटुक्क श्लेष्मान्तक वनमा किराँतको भेष धारण गरी विहार गर्न जानुभयो। माता पार्वतीले सो कुरा चाल पाई महादेवलाई छल्नका लागि आफू पनि किराँतिनीको रूप धारण गरेर सोही वनमा जानुभयो। अत्यन्त राम्री भई, हाउ भाउ कटाक्षले युक्त भई एउटा वृक्षको मुनि बसिरहनु भएको अवस्थामा किराँतरूप महादेव पनि वन विहार गर्दै उक्त स्थानमा आइपुग्नुभयो । महादेवले तिमी को हौ ? यो वनको माझमा किन बसिरहेकी छ्यौ ? आदि भनी सोध्दा पार्वतीले आफू किराँतिनी भएको तथा तपस्या गर्नका लागि भनेर त्यहाँ बसेको कुरा भन्नुहुन्छ । यस्ता तरहले महादेव र पार्वतीबीच नाना प्रकारका कुराकानीहरू भए । रातिको बास पनि त्यही रुखमुनि सँगै बिताउनुभयो । यस्तै तरहले केही दिन बितेपछि पार्वतीको रूप, हाउ भाउ, कटाक्षबाट प्रभावित भई विवाहको प्रस्ताव महादेवले राख्नुभयो । किरातिनी रूपमा रहेकी पार्वतीले आफूले महादेव स्वामी पाउँ भनेर तपस्या गरिरहेकी हुनाले उहाँबाहेक अरुलाई पति बनाउन असमर्थ रहेको कुरा बताउनुभयो । किराँतिनीको कुरा सुनेर किराँतरूप महादेवले आफू नै महादेव भएको तथा वन विहार गर्ने इच्छाले यस वनमा रूप बदली आएको कुरा बताई ज्योति स्वरूपको दर्शन दिनुभयो। अनि किराँतिनी रूपकी पार्वतीले प्रणाम गर्दै कन्यादान लिनका लागि आफ्नो बाबुआमा भएको ठाउँमा हिँड्न भनी आफ्ना बाबुआमाको घर भनेर महादेवलाई हिमालय पर्वतको घर लैजानुहुन्छ। तब भगवान् महादेवले पार्वतीले आफूलाई छल गरेको कुरा चाल पाई लाजले अन्तर्धान भई श्लेषमान्तक वनको उत्तर भागमा किराँतेश्वर शिवलिंग भई बस्नुभयो। फेरि पार्वतीले ध्यानदृष्टिबाट सो कुरा चाल पाई किराँतेश्वर महादेवको उपासना गर्न थाल्नुभयो । पार्वतीले नित्य वाग्मती नदीमा स्नान गरी किराँतेश्वर शिवलिंगलाई वस्त्र पहिर्‍याई धूप, दीप, नैवेद्य आदि चढाई तपस्या गर्न लाग्नुभयो । यसबाट महादेव प्रसन्न भई दर्शन दिई दुवै हिमालय पर्वतको घरमा लाग्नुभयो ।

(किरातेश्वर शिवलिंग)

उक्त किराँतेश्वर शिवलिंग हाल पनि श्लेष्मान्तक वनमा रहेको छ तथा माता पार्वतीले नित्य स्नान गरेको स्थान नै गौरीघाट हो । जसले यस गौरीघाटमा स्नान गरी किराँतेश्वर शिवलिंगको दर्शन गर्दछ, उसका सम्पूर्ण दु:ख नाश हुने, लक्ष्मीवृद्धि हुने, यस लोकमा सुख सम्पत्ति पाई परलोकमा कैलाश पद पाउने कुरा श्रीस्वस्थानीमा व्रतकथामा उल्लेख छ। त्यसैकारण माघ महिनामा गौरीघाटमा स्नान गरी किराँतेश्वरको दर्शन गर्न जानेहरूको भीड नै हुने गर्दछ । पौष शुक्ल पूर्णिमादेखि माघ शुक्ल पूर्णिमासम्म यस स्थानमा श्रीस्वस्थानीको कथा पाठ गर्नेहरूको लाम नै लागेको हुन्छ। जय गुरुदेव !

# कामरूपतीर्थको माहात्म्य वर्णन श्रीमहादेवबाट

***श्रीमहाभागवतमहापुराणअन्तर्गत श्रीमहादेव-नारद संवादमा 'कामाख्यामाहात्म्यवर्णन' नामक छयत्तरौँ अध्यायमा कामरूपतीर्थ (कामाख्या-शक्तिपीठ) को वर्णन स्वयं देवाधिदेव श्रीमहादेवको श्रीमुखबाट यसप्रकार भएको छ–***

श्रीनारदजी सोध्नुहुन्छ– प्रभु ! देव ! जगन्नाथ ! हजूरको मुखकमलबाट भगवती गङ्गाको अतुलनीय माहात्म्य सुनेर म पवित्र भएको छु, यसमा कुनै शंका छैन । हजूरबाट कामरूपतीर्थको माहात्म्यका बारेमा पनि विस्तारपूर्वक सुन्ने चाहना छ ।

श्रीमहादेव बताउनुहुन्छ– मुनिश्रेष्ठ ! सावधानीपूर्वक सुन्नुहोस् । म कामरूपतीर्थको माहात्म्य बताउँछु जहाँ प्रत्यक्ष फल दिने साक्षात् भगवती शिवा स्वयं विराजमान छिन् । मृत्युलोकमा यसभन्दा उत्तम कुनै तीर्थ छैन जहाँ गन्धर्वहरूसहित देवगण तथा ब्रह्मादि श्रेष्ठ देवता प्रतिदिन आएर भक्तिपूर्वक पूजा गर्दछन् र जहाँ पृथ्वीमा मानिसको कल्याणका लागि योनिरूपमा महामाया पूर्णा आदिशक्ति परमेश्वरी लीलापूर्वक विराजित छन् । मुनिश्रेष्ठ ! पहिले भगवतीको प्रत्यक्ष दर्शनको इच्छा राख्ने पितामह ब्रह्मा, विष्णु तथा भगवान् शंकरले त्यस कामाख्या क्षेत्रमा तपस्या गरेका थिए । पूर्वकालमा त्यहाँ मुनिश्रेष्ठ वसिष्ठले पुरश्चरण गरेर मन्त्र सिद्धि गरेका थिए र उनी दोस्रो सृष्टिकर्ताजस्तै बनेका थिए । मुनिश्रेष्ठ ! जति अन्य देवता, ऋषिगण तथा सिद्धगण अव्याहत आज्ञावाला भएका छन् उनीहरू सबै भगवती कामाख्याको कृपाले नै भएका हुन् । उनीहरूले भगवती कामाख्याको महामन्त्रको जप गरेर मन्त्र सिद्ध गरेका हुन् । उनीहरूले आकाशमा विचरण गर्ने शक्ति प्राप्त गरे तथा देवताहरूद्वारा पनि पूज्य हुन गए ।

मुनिश्रेष्ठ ! मनुष्यले योनिरूपा, अतिगोपनीय भगवती कामाख्याको दर्शन, स्पर्श र पूजन गरेर जीवन्मुक्त हुन जान्छ र दोस्रो शंकरजस्तै पृथ्वीतलमा विरचण गर्दछ । नारद ! उसले देवताहरूलाई पनि दण्ड दिने सामर्थ्य राख्दछ। इन्द्रादि सबै प्रमुख देवगण उसको आज्ञाको अधीन हुन्छन् । उसको लागि तीनै लोकमा केही पनि असाध्य हुँदैन । जो योनिमण्डलमा गएर परमदेवी त्रिपुरभैरवी (कामाख्या) लाई भक्तिपूर्वक प्रणाम गर्दछ, उसको जन्म सफल हुन्छ । ब्रह्महत्या गर्ने मनुष्य पनि भगवती कामाख्याको पुण्यक्षेत्रको स्पर्श गर्नाले मात्रै पनि भगवतीको कृपाले क्षणभरमै पापले मुक्त हुन जान्छ, यसमा कुनै शंका छैन । वत्स ! भगवती कामाख्याको दर्शन देवताहरूका लागि पनि दुर्लभ छ । जसले भगवतीको दर्शन गर्दछ, ऊ देवताहरूद्वारा विशेषरूपले पूजित हुन्छ। हजारौँ जन्म-जन्मान्तरमा गरिएका सञ्चित पापसमूह भगवती कामाख्याको दर्शन मात्रले क्षणभरमा नै भस्मीभूत हुन जान्छ । वत्स ! यस पृथ्वीतलमा देवी भगवती कामाख्याको शक्तिपीठसमान कुनै तीर्थ छैन । यो गोपनीय रहस्य तपाईंले अन्यत्र प्रकाशित गर्नु हुँदैन ।

यस भारतवर्षमा भगवती सतीको अङ्ग-प्रत्यङ्ग खस्नाले यो ठाउँ मनुष्यहरूको पापलाई

नाश गर्ने तथा पुण्यमय छ। भगवतीका सबै अङ्गमा योनिअङ्ग सर्वश्रेष्ठ छ किनकि भगवती नै योनिरूपमा सबै स्त्रीहरूमा अवस्थित छन् । त्यो योनि जुन स्थानमा खस्यो, त्यहाँ स्वयं साक्षात् भगवती सती प्रतिष्ठित छन् । यस पृथ्वीतलमा त्यससमान पुण्यदायक कुनै स्थान छैन। सिद्ध, गन्धर्व, देवता, किन्नर र राक्षसहरूका आराध्य भगवान् शंकर वाराणसी (काशी) क्षेत्रमा प्राणीहरूलाई मुक्ति दिन्छन्, उनी स्वयं पनि कामाख्यामा आएर मुक्ति प्रदान गर्ने सामर्थ्य पाउनका लागि आकांक्षा राख्दछन् । यसभन्दा पवित्र स्थान अन्य पाइँदैन ।

जसले श्रीयोनिमण्डल तीर्थको प्रदक्षिणा गर्‍यो उसले तीनै लोकको पूर्णरूपमा प्रदक्षिणा गर्‍यो । जसले भगवती कामाख्याको निर्माल्य शिरमा धारण गर्दछ, ऊ देवताहरूद्वारा पूजित भएर भैरवसमान विचरण गर्दछ । यस पृथ्वीतलमा कहीँ पनि उसलाई भय हुँदैन । उसको भयले भय प्रदान गर्ने पनि धेरै टाढा भाग्दछ । महामुनि ! जो कोहीले पनि दिएको भगवतीको प्रसाद प्राप्त हुनासाथ ग्रहण गर्नुपर्दछ, यसमा सोच्नुपर्ने नै छैन । मुनि ! कुनै उत्तम वर्णको व्यक्तिले पनि यदि निम्न वर्णको व्यक्तिबाट प्राप्त भगवतीको प्रसादलाई शिरबाट भक्तिपूर्वक प्रणाम गरेर ग्रहण गर्दछ भने त्यसले भगवतीको कृपाबाट तत्क्षण ऐश्वर्य र मुक्ति प्राप्त गर्दछ । आफ्नो पितृहरूको तृप्तिको इच्छाले जसले त्यस शक्तिपीठमा श्राद्ध गर्‍यो, उसले मानौँ हजार वर्षसम्म गयाश्राद्ध गर्‍यो, यसमा कुनै शंका छैन । जो जितेन्द्रिय उत्तम साधकले ब्रह्मपुत्र नदीमा स्नान गरेर भगवतीको मन्त्रको पुरश्चरण गर्दछ, उसको लागि मन्त्र निश्चितरूपमा सिद्ध हुन्छ, ऊ अमोघ आज्ञावाला भएर दोस्रो भगवान् शंकरसमान हुन जान्छ र उनको अनुग्रहले पृथ्वीमा हिँड्ने आकाशचरी हुन जान्छ ।

भगवती कामाख्याको शक्तिपीठमा मन्त्र जप्ने व्यक्तिले अज्ञानवश पनि पुरश्चरणको विधिमा कालादि मुहूर्तको विचार गर्नुपर्दैन । यदि उसले यस्तो विचार गर्दछ भने त नरकमा जान्छ ।

शक्तिपीठमा भगवती भैरवीको मन्त्र जप्नेलाई सुरत्व, इन्द्रत्व, ब्रह्मत्व, शिवत्व अथवा विष्णुत्व सुलभताले प्राप्त हुन जान्छ। कार्तवीर्यलाई मार्ने इच्छाले जमदग्नि ऋषिका पुत्र परशुरामले उनै भगवती कामाख्याको शक्तिपीठमा पुरश्चरण गरेर साक्षात् विष्णुरूपतालाई प्राप्त गरेका थिए। त्यसैप्रकार पुरश्चरण विधिले जसले पृथ्वीतलमा भगवती कामाख्याको शक्तिपीठमा मन्त्र जप्दछ, ऊ अन्तमा देवी भगवतीको सारूप्य मुक्ति प्राप्त गर्दछ । मुनिश्रेष्ठ ! कामाख्या सर्वश्रेष्ठ तीर्थ हो, कामाख्या सर्वश्रेष्ठ तपस्या हो, कामाख्या सर्वश्रेष्ठ धर्म हो, कामाख्या परम गति हो, कामाख्या सर्वश्रेष्ठ धन हो तथा कामाख्या परम पद हो– यस प्रकारको भावना गर्ने मनुष्यको पुनर्जन्म हुँदैन। जुन मानिसको अनेक सहस्रजन्मको सञ्चित महान् पुण्य हुन्छ, उसैलाई भगवतीको दर्शन हुन्छ। मुनि ! जसरी देवीलोक अन्यका लागि दुर्लभ मानिन्छ, त्यसरी नै भगवती कामाख्याको श्रीकामरूप नामक (शक्तिपीठ) तीर्थ देवताहरूका लागि पनि दुर्लभ छ । जय गुरुदेव !

# तान्त्रोक्त श्रीस्वस्थानी साधना

आजको हाम्रो समाजमा देवीदेवता, भगवान्, आफ्ना इष्ट, कुलदेवता, ग्रामदेवता, पितृदेवता आदिलाई विभिन्न रूपबाट मान्ने, पूज्ने, आदर गर्ने आदि गरेको पाउँछौं। प्रत्येक जात जातिमा, विभिन्न सम्प्रदाय आदिमा आ-आफ्नै विधि विधान, आ-आफ्नै किसिमका प्रक्रियाहरूबाट पूजाआजा, व्रत, हवन आदि गर्दै आइरहेको पाउँछौं। हामीले परापूर्वकालदेखि चलिआएको परम्परा, आफ्नो संस्कृतिलाई निरन्तरता त दियौं तर यसको वास्तविक यथार्थ भने हामीले बुझ्न सकेनौं। हाम्रा पूर्वज ऋषिमुनिहरूबाट प्रतिपादित यी दिव्य विधिविधानहरू त आफ्नो ठाउँमा लाभप्रद नै छन्, तर हाम्रो आफ्नै कमजोरीको कारणले गर्दा यसका फाइदाहरूबाट भने हामी वञ्चित भइरहेका छौं। प्रत्येक शुभ कार्यको पछाडि लुकेका रहस्यहरू नबुझी केवल सतहमा मात्र सीमित रहेको यथार्थ सबैको सामु प्रष्ट नै छ। वर्षौं देवीदेवताको पूजा गरेर पनि, व्रत बसेर पनि, मन्दिर धाएर पनि देवीदेवताको आशीर्वाद नपाएको, आफ्नो मनोकामना पूरा नभएको, विभिन्न समस्याहरूबाट पार नपाएको, असन्तोष उत्पन्न भई देवीदेवता र दिव्य शक्तिमाथि नै प्रश्नचिह्न लागेको वर्तमान अवस्थामा साधना नै एक मात्र विकल्प हुन सक्छ। साधनाले तुरुन्त फल प्रदान गर्दछ भने लाखौं करोडौं मन्त्र जपेर नपाउने सिद्धि शक्ति केवल एउटै साधनाले पनि दिन सक्छ। साधनाहरू त धेरै प्रकारका हुन्छन्। ती साधनाहरूले दिने लाभहरूलाई शब्दमा केलाउनु सम्भव छैन र केलाउन खोज्नु मूर्खतासिवाय केही हुने छैन। मानवबुद्धिले साधनाका लाभ पक्षलाई केलाउन खोज्नु हास्यास्पद मात्र हुनेछ।

स्वस्थानी माताको साधनाको विषयमा पनि यही भन्न सकिन्छ। यो एउटा दिव्य कवच हो– रोगबाट बच्ने, शोकबाट बच्ने र यो बाधा, व्यवधान र अड्चनलाई हटाउने माध्यम हो।

माता स्वस्थानीको आशीर्वाद, कृपा प्राप्त गर्न हाम्रो समाजमा उहाँको बारेमा विभिन्न कथाहरू सुन्ने प्रचलन बढ्दै आइरहेको छ। प्रत्येक वर्ष पौष शुक्ल पूर्णिमादेखि एक महिनासम्म अर्थात् अर्को पूर्णिमासम्म उहाँका कथाहरू सुनेर व्रत बस्ने चलनअनुसार यस वर्ष पनि कैयौं व्यक्तिहरू पौष पूर्णिमादेखि एक महिनासम्म व्रतादि बसेर श्रीस्वस्थानी माताको उपासना गर्दै हुनुहुन्छ। मानिसहरू विभिन्न इच्छित मनोकामनाहरू राखेर माताप्रति भक्तिभाव अर्पण गर्ने गर्दछन्। व्रतहरू फलप्रद हुनका लागि गरिने विभिन्न क्रियाकलापहरूमध्ये साधना पनि एक हो।

माता पार्वती जसलाई महादेवी बनाई सारा विश्व ब्रह्माण्डका अधिपति भगवान् शिवकी अर्धाङ्गिनी बन्न आशीर्वाद दिने जगदम्बिके माता श्रीस्वस्थानीको महिमा अवर्णनीय छ। दुःख, दारिद्र्य, विभिन्न बाधा व्यवधानबीच नारकीय जीवन बिताइरहेकी गोमा ब्राह्मणीलाई माता पार्वतीको कृपास्वरूप सप्तर्षिद्वारा माता श्रीस्वस्थानीको पूजाआजा र साधना गराई सारा दुःख कष्ट एवं दारिद्र्यबाट छुटकारा दिलाई नवराजजस्तो साधारण व्यक्तिलाई लावण्य देशको राजा बनाउनुभएको प्रसंगबाट पनि माताको महानता, विशालता एवं करुणामय स्वरूप स्पष्ट हुन आउँदछ। कथामा सांकेतिक रूपमा विभिन्न आदर्श, नैतिकता, चरित्र एवं धर्मका नीति नियम र अनुशासनलाई कसरी पालना गर्नुपर्दछ र तिनलाई अनादर गर्दा, भगवान्‌लाई निन्दा गर्दा चन्द्रावतीले भोगेको नारकीय जीवन, जिउँदो लासको रूपमा चरम सीमासम्म भोगेका दुःख, कष्टहरू सबैका लागि लाभप्रद शिक्षा हुन सक्छन्। तर कथाबाट वास्तविक फाइदा लिन नसकी कतिपय मानिसहरूले औपचारिकतामा मात्र श्रीस्वस्थानी कथालाई सीमित बनाएका उदाहरणहरू समाजमा नदेखिने भने होइनन्। हाम्रो समाजमा भगवान्को आशीर्वाद सबैले नपाऊन् भनी विभिन्न किसिमका भ्रम एवं अन्धविश्वासका थुप्रै जालाहरू बिछ्याइएको पाइन्छ। महिलाहरूले भगवान् हनुमान् एवं भैरवलाई छुनै नहुने, पूजा गर्नै नहुने गलत धारणाले जरो गाडेकोले महिलाहरू हनुमान् एवं भैरवको दर्शन गर्न, ढोग्न हिचकिचाएको पाउँछौं। यस्ता भ्रमका जालोहरू हटाउनु हामी सबैको कर्तव्य हो। भगवान्को आशीर्वाद प्रत्येक व्यक्ति, चाहे आइमाई होस् वा

लोग्ने मानिस, सबैले प्राप्त गर्ने उत्तिकै अधिकार छ । त्यस्तै माता श्रीस्वस्थानी, जो विशेष गरी नेपालकै देवीको रूपमा विख्यात् हुनुहुन्छ, सारा मानिसहरूलाई सम्पूर्ण रूपले कृपा गरी कल्याण गर्न सक्ने माता श्रीस्वस्थानीको पूजाआजा, व्रत एवं साधना केवल स्त्रीहरूले मात्र गर्नुपर्छ, लोग्ने मानिसले उहाँको साधनादि गर्नु हुँदैन, उहाँलाई मान्नु हुँदैन भनी भ्रमात्मक प्रचार र धेरैले संकुचित धारणा राखेको पाइन्छ। यसैले सारा जगत्‌की जननी, सम्पूर्ण शक्ति, सिद्धि प्रदान गर्न सक्ने, दुःख, कष्ट, समस्या, व्याधिबाट पार लगाउने, इच्छित मनोकामना प्राप्त गर्न सकिने माता श्रीस्वस्थानीको दिव्य साधना गरी जो कोहीले पनि उहाँको आशीर्वाद प्राप्त गर्न सक्दछन् । साधना गर्दा विशेष गरी उहाँको मन्त्र पूर्व अथवा उत्तर फर्केर गर्ने चलन छ । विशेषतः पौष शुक्ल पूर्णिमादेखि माघ शुक्ल पूर्णिमासम्म उहाँको मन्त्र जप, अनुष्ठान, व्रतादि गर्नाले उत्तम फलको प्राप्ति हुने कुरा शास्त्रमा वर्णित भएकोले पाठकवर्गले पनि सोहीअनुसार गर्न सक्नुहुनेछ । यस विशेष अवसरमा श्रीस्वस्थानी माताको जप गर्न निम्न मन्त्र प्रयोग गर्न सकिन्छ ।

**मन्त्र :**

**॥ ॐ ह्रीं श्री स्वस्थानी मातेश्वरी नमः ॥**

जय गुरुदेव ।

प्रेरक प्रसंग

# को ठूलो दानी ?

*दानवीरको रूपमा कर्ण आफ्नो समयमा प्रसिद्ध थिए । यता अर्जुनलाई पनि आफ्नो दानशीलतामा ठूलै गर्व थियो । कुनैबेला भगवान् श्रीकृष्णले अर्जुनको अगाडि नै कर्णको दानशीलताको मुक्त कण्ठले प्रशंसा गर्नुभयो । यसबाट दुःखी हुँदै अर्जुनले भने- 'माधव ! हजूरले बारम्बार कर्णको प्रशंसा गरेर मेरो हृदयमा चोट पुऱ्याउनुहुन्छ । मलाई लाग्दछ हजूरलाई मेरो दानशीलताको बारेमा ज्ञान नै छैन नत्र यसरी बारम्बार भन्नुहुन्नथ्यो ।' भगवान् चुप लाग्नुभयो ।*

*एकदिन यस कुराको परीक्षाको अवसर पनि आइहाल्यो । एकजना ब्राह्मण अर्जुनको दरबारमा आएर भन्न लागे-'धनन्जय ! तपाईंको दरबारबाट कुनै पनि याचक खाली हात फर्किएर जाँदैन भन्ने सुनेको छु । म आज ठूलो धर्मसंकटमा परेको छु । मेरी श्रीमती आज परलोक गइन् । आफ्को शरीरको दाहसंस्कार चन्दनको दाउराबाट नै होस् भन्ने उनको अन्तिम इच्छा थियो । के हजूर यति चन्दनको दाउराको बन्दोबस्त गरिदिन सक्नुहुन्छ ?' 'किन नसक्नु । अहिले यसको प्रबन्ध हुनेछ,' अर्जुनले जवाफ दिए । अनि उनले तुरुन्त आफ्नो सेवकलाई बोलाएर भने- 'यिनलाई अहिलै पच्चीस मन जति चन्दनको काठ तौलेर देऊ ।' दुर्भाग्यवश त्यस दिन न भण्डारमा नै चन्दनको काठ थियो न त बजारमा नै । अन्तमा त्यो सेवकले लाचार भएर अर्जुनसँग भन्यो- 'महाराज ! चन्दनको काठको प्रबन्ध सर्वथा असम्भव छ' । तब ब्राह्मणले भने- 'के म अब अरु कसैको ढोकामा जाऊँ ?' अर्जुनले भने-'महाराज ! म लाचार छु ।'*

*तब ती ब्राह्मण कर्णकहाँमा पुगे । अघिजस्तै कर्णको सेवक पनि बजारबाट खाली हात नै फर्कियो । तब ब्राह्मणले भने- 'महाराज ! अब म फर्किउँ त ?' कर्णले भने-'तपाईं निराश नहुनुहोस् । म अहिल्यै तपाईंको लागि चन्दनको काठको प्रबन्ध गर्दछु ।' यति भनीसक्ता नसक्तै उनले आफ्नो महलको चन्दनका खम्बाहरू ढालेर ब्राह्मणको माग पूरा गरे । उनको महल ढल्यो तथापि ब्राह्मणलाई खाली हात फर्काएनन् । अनि ब्राह्मणले आफ्नी पत्नीको दाहसंस्कार गरे । साँझमा भगवान् श्रीकृष्ण अर्जुनका साथमा घुम्नका लागि निस्कनुभयो । बाटोमा श्मशाननजिकै तिनै ब्राह्मण कीर्तन गरिरहेका थिए- 'बारम्बार धन्यवाद छ ती कर्णलाई जसले आज मेरो संकट हटाउनका लागि आफ्नो महलको चन्दनका खम्बा निकालेर त्यस्तो सुनजस्तो महल नै ढालिदिए । भगवान्‌ले उनको भलो गरुन् ।'*

*श्रीकृष्णले अर्जुनतर्फ हेरेर भन्नुभयो- 'अर्जुन ! चन्दनको खम्बा त तिम्रो महलमा पनि थियो तर तिमीलाई त्यसको याद नै आएन ।' अर्जुनले लाजले शिर झुकाए ।*

*जय गुरुदेव ।*

सद्गुरुदेव प्रवचनांश

# ध्यान त चेतनाको स्पर्श हो

– परमपूज्य सद्गुरुदेव
डा. नारायणदत्त श्रीमालीज्यू

*(परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले आफ्नो अवतरणकालमा ध्यानसम्बन्धी थुप्रै प्रवचन दिनुभएको छ । तिनै प्रवचनहरुमध्येबाट केही अंश प्रस्तुत गर्दै आइरहेका छौँ ।)*

**बुद्धि पक्ष र हृदय पक्ष**

ध्यानं वदेयं सहितं वदेयं,
प्राणोर्थवा चरितं सदैव ।
आत्मानुभूति प्रणतं परमं वदेवं,
ज्ञानो सतां वै सहितं प्रणम्यं ॥

जीवनलाई राम्रोसँग बुझ्ने र जीवनसँग तादात्म्यता कायम गर्ने, जीवनलाई पूर्णरूपबाट भोग्ने क्रिया र जीवनमा स्वत: पूर्णरूपबाट उतार्ने क्रियालाई 'ध्यान' भनिन्छ ।

आजको युगमा ध्यानको महत्ता, मूल्य एकदमै बढेको छ । ध्यानको तात्पर्य बाहिरी संसारबाट अलग्गिनु, बाहिरी संसारसँग हाम्रो कुनै पनि प्रकारको सम्बन्ध नरहनु हो । यसर्थ, बाहिरी संसार तुच्छ, महत्त्वहीन लाग्नु आवश्यक छ । तर सामान्यरूपले यस्तो हुन सक्दैन । यस्तो किन हुन सक्दैन भने मनुष्यका अगाडि दुईवटा विकल्प छन्, मनुष्य दुईवटा तथ्यमा जीवित छ, मनुष्यको अगाडि दुई धारणा, दुई विचार, दुई पद्धतिहरू छन् । एउटा पद्धति उसको बुद्धि पक्ष हो भने अर्को उसको हृदय पक्ष हो ।

बुद्धि पक्षले उसलाई सदैव गलत बाटोमा गतिशील गर्दछ, हर समय मानिसलाई भयभीत गरिरहन्छ, हर समय मानिसलाई एउटा यस्तो चिन्तन, यस्तो विचार, यस्तो क्रिया दिन्छ जसबाट मानिस भ्रमित हुन्छ, उसले शंका गर्दछ । शंकाको अर्को नाम बुद्धि हो । भ्रमको अर्को नाम बुद्धि हो । मनमा कुनै प्रकारको अहंकारलाई पाल्नु, पोस्नु बुद्धि हो ।

बुद्धिको अर्थ हो– म केही हुँ, म विद्वान् छु, म योग्य छु, म समझदार छु, म शिक्षित छु, म पढे-लेखेको हुँ, म

धनी छु, मसँग चेतना छ, मसँग भोग-विलास, ऐश-आरामका सामग्रीहरू छन्। बुद्धिले अहङ्कारलाई बारम्बार प्रदर्शित गर्दछ, अहंको पालनपोषण गर्दछ र यसबाट व्यक्तिको हृदय उजागर हुन सक्दैन । बुद्धिले व्यक्तिको मूल स्वरूपलाई बुझाउन सक्दैन, उसलाई चेतन अवस्थामा लान सक्दैन ।

यसैले योगीहरू, साधुहरूले एकै स्वरमा भनेका छन् कि यदि जीवनलाई बुझ्नु छ भने बुद्धि पक्षबाट बुझ्न सकिँदैन र जहाँबाट बुद्धि पक्ष समाप्त हुन्छ त्यहाँबाट नै भावना पक्ष वा श्रद्धा पक्ष प्रारम्भ हुन्छ ।

## विचारशून्य मस्तिष्क

मानव मस्तिष्क संसारको सबैभन्दा जटिल एवं कठिन मेशिन हो र यो हरेक क्षण विचार, भावना, प्रक्रिया आदिको माध्यमबाट गतिशील रहन्छ । मस्तिष्कले सोच्न छाडोस् वा दिमागमा कुनै पनि प्रकारका विचार नआऊन्, यस्तो त कुनै पनि क्षण हुँदैन । जबसम्म दिमागमा विचारहरू आइरहन्छन् बुद्धि पक्ष हावी भइरहन्छ । दिमागमा विचार, भावना अग्रसर भएसम्म कैयौँ प्रकारका शङ्कादिको सृजना भइरहन्छ । यसर्थ, केही यस्तो गर्नु आवश्यक छ जसबाट केही क्षणको लागि मस्तिष्कले कार्य नगरोस् र दिमागलाई केही आराम, विश्राम मिलोस् ।

वैज्ञानिक परिभाषाअनुसार मस्तिष्कले एक सेकेण्डमा ३ लाख विचारलाई जन्म दिन्छ र छाड्छ । ३ लाख विचार एकैसाथ संचरित हुन्छन् । यसबाट हामी बुझ्दछौँ कि मस्तिष्कमाथि अत्यधिक बोझ छ । तीन लाख विचारले एकैसाथ प्रहार गरेपछि मस्तिष्क निश्चय नै कमजोर, कुतर्की बन्दछ । तसर्थ, मानव मस्तिष्कमाथिको बोझ कम गर्न आवश्यक छ । त्यो बोझ कम गर्ने एक मात्र उपाय हो– विचारशून्य मस्तिष्क ।

विचारशून्य मस्तिष्कको तात्पर्य कुनै प्रक्रिया अपनाएर मस्तिष्कमा सकेसम्म कम विचार उत्पन्न हुन दिनु हो । जब मस्तिष्कमा कम विचार उत्पन्न हुन्छन्, बाहिरी संसारबाट व्यक्तिको मस्तिष्क अलगिन्छ र जब बाहिरी संसारबाट व्यक्ति अलगिन्छ तब उसले आफूभित्र प्रवेश गर्ने क्रिया आरम्भ गर्दछ । आफूभित्र प्रवेश गर्ने क्रियाको आरम्भपछि नै व्यक्तिले आफ्नो इष्टको दर्शन प्राप्त गर्न थाल्दछ, ब्रह्माण्डका अनुभूतिहरू प्राप्त गर्दछ । यी सबैको लागि विचारशून्य मस्तिष्कको आवश्यकता पर्दछ । यहाँ प्रश्न उठ्न सक्छ–

के विचारशून्य मस्तिष्क सम्भव छ ?

के यस्तो कुनै विधि छ जसबाट विचारशून्य मस्तिष्क बनाउन सकिन्छ ?

जीवनमा मनुष्य जबसम्म जाग्रत अवस्थामा हुन्छ उसले केही न केही सोचिरहेकै हुन्छ । हिँड्दा, बस्दा, विश्राम गर्दा उसले चाहेर नचाहेर केही न केही सोचिरहन्छ। आराम गर्नको लागि पल्टँदा पनि भूतकालका कैयौँ घटनाहरू व्यक्तिको दिमागमा आई नै रहन्छन्, भविष्यका कैयौँ योजना बनिरहन्छन्, कुनै न कुनै विचारले मस्तिष्कलाई संक्रमित गरिरहेकै हुन्छ । तर यो विचारको संक्रमणताको कारणले मानिसले राम्रोसँग जीवनयापन गर्न सक्दैन । निद्रावस्थामा, सारा शरीर शिथिल भएको समयमा समेत मस्तिष्कमा विचारहरू गतिशील भइरहन्छन् जसलाई स्वप्न भनिन्छ ।

एक प्रकारबाट स्वप्न विचारहरूको प्रस्फुटीकरण हो र संसारमा स्वप्न नदेख्ने व्यक्ति नै हुँदैनन् । यो बेग्लै कुरा हो कि केही व्यक्तिलाई बिहान उठेपछि स्वप्न याद रहँदैन तर यो उसको मस्तिष्कको कमजोरी अथवा न्यूनताको कारणले हुन्छ । वास्तवमा मानिसले निद्राको पूरै अवधिभरि स्वप्न देखिरहेकै हुन्छ । यसबाट यो कुरा प्रष्ट हुन्छ कि मनुष्य हर समय विचारहरूबाट आक्रान्त रहन्छ जसलाई बुद्धि पक्ष भनिन्छ, विचार भनिन्छ, भावना भनिन्छ ।

शास्त्रहरूले यो कुरालाई धेरै पहिले नै स्वीकारेका थिए र अहिले विज्ञानले स्वीकार्दैछ कि विचारशून्य मस्तिष्कले नै नवीन मानवको निर्माण गर्न सक्दछ । नवीन मनुष्यको उत्पत्तिको लागि, यो पृथ्वीमा नवीन मनुष्यलाई ल्याउनको लागि विचारशून्य मस्तिष्क बनाउनु आवश्यक हुन्छ । यसको लागि आफ्नो मस्तिष्कलाई विश्राम दिनु, त्यसमाथि कमभन्दा कम बोझ थोपर्नु र एक सेकेण्डमा तीन लाखको सट्टा एक लाख मात्र विचारहरूलाई आउन दिनु र क्रमश: विचारहरू घटाउँदै लानु आवश्यक हुन्छ । विचारहरूलाई न्यून गर्दै गएर त्यो स्थितिमा पुग्नु आवश्यक हुन्छ जहाँ कुनै विचार, कुनै भावना, कुनै तरङ्ग नहोस् । यस्तो स्थिति नै विचारशून्य मस्तिष्क हो ।

विचारशून्य मस्तिष्क नै महापुरुषको संज्ञा हो, श्रेष्ठताको संज्ञा हो । विचारशून्य मस्तिष्क नै समाधिको अवस्था हो । तसर्थ, जीवनमा समाधिको अवस्था प्राप्त गर्न आवश्यक छ । तसर्थ, जीवनमा पूर्णता प्राप्तिको लागि आफ्नो मस्तिष्कमाथि पूर्णरूपले नियन्त्रण प्राप्त गर्नु आवश्यक छ, मस्तिष्कलाई विचारशून्य बनाउनु आवश्यक छ ।

जब मानिसले आफ्नो मस्तिष्कमाथि नियन्त्रण प्राप्त गर्दछ उसमा क्रोध हुँदैन, भय हुँदैन र एक अर्काप्रति प्रतिशोधको भावना हुँदैन, त्यसबेला कुनै कष्ट र पीडा हुँदैन, छिमेकीहरूसँग झगडा हुँदैन, युद्ध हुँदैन र कुनै पनि प्रकारको संत्रास र आतंकको साम्राज्य पृथ्वीमा हुँदैन । यस अवस्थामा मात्र विश्व अद्वितीय बन्न सक्दछ । आज चारैतर्फ शान्ति र सुखको लालसा छ, शीतल विश्वको कामना छ र यसको लागि आवश्यक छ आफ्नो मस्तिष्कमाथि पूर्ण नियन्त्रण प्राप्त गरेका व्यक्तिहरूको निर्माण गर्न, विचारशून्य मस्तिष्कको निर्माण गर्न ।

यो क्रिया विज्ञानको माध्यमबाट सम्भव छैन, बारुद, बम र हातहतियार बनाउने व्यक्तिहरूबाट यो क्रिया सम्भव छैन । यसको उत्तर त केवल शास्त्रमा छ, उपनिषद्मा छ, वेदमा छ र ती सबैले एकै स्वरमा परिलक्षित गरेको 'सद्गुरुदेव'को कृपाबाट मात्र विचारशून्य मस्तिष्कको निर्माण सम्भव छ ।

मानवले जुन रूपमा जसरी जन्म लिएको भएता पनि ऊ अद्वितीयतातर्फ बढ्न आवश्यक छ । ती प्रक्रियाहरूतर्फ अघि बढ्न आवश्यक छ जसबाट ऊ एउटा नवीन मानव बन्न सक्छ । जब यस्तो अद्वितीय समाज निर्माण हुन्छ तब एक अद्वितीय समाजको रचना हुन्छ । जब अद्वितीय समाज बन्छ तब एक अद्वितीय देशको निर्माण हुन्छ र त्यस्तो देशबाट नै अद्वितीय विश्वको कल्पना गर्न सकिन्छ ।

यस्तो अद्वितीय विश्व अत्यन्त आनन्द, सुख, सौभाग्य, प्रसन्नता, आह्लादले भरिपूर्ण हुनेछ जहाँ छलकपट, असत्य, व्यभिचार हुने छैन, कुनै प्रकारको द्वेष र झैझगडा हुने छैन, कुनै प्रकारको आतङ्क हुने छैन । यस्तो विश्व नै सही अर्थमा एउटा परिवार हुनेछ जहाँ न धर्मको कुनै स्थान हुनेछ, न जातिको, न त राष्ट्रको नै ।

सम्पूर्ण विश्व एउटा मानव समुदाय हो । यो कल्पनालाई ऋषिहरूले ईशावास्योपनिषद्मा स्पष्ट पारेका छन् र यो यही प्रक्रियाबाट मात्र बन्न सम्भव छ । अहिले सबै यही प्रक्रियातर्फ प्रयत्नशील हुनु आवश्यक छ जसबाट विचारशून्य मस्तिष्कको निर्माण हुन्छ ।

जय गुरुदेव !

# श्रीस्वस्थानी, साँखु र शालीनदी

सुवर्णवर्णदीप्ताभां त्रिनेत्रां कमलासनाम् ।
सिंहासनासमासीनां सर्वालंकारभूषिताम् ॥
नीलोत्पलधरां वामे दक्षिणे वरदां शुभाम् ।
खड्गचर्मधरां चोर्ध्वं वामदक्षिणयोः क्रमात् ॥
चतुर्भुजां च मां तत्र पूजयेद् वृषकेतनम् ।
एवं ध्यात्वा महादेवीं स्वस्थानीं जगदीश्वरम् ॥

पीतवर्ण सुवर्णभन्दा पनि दिव्य भएकी, तीन आँखा भएकी कमलको फूलझैँ उज्यालो मुख भएकी, सिंहासनमा बसेकी, नाना अलङ्कार लाएकी, खड्ग चर्म नीलोत्पल लिएकी, चार हात भएकी, यस्ती स्वस्थानी परमेश्वरीलाई सम्झी मेरो पनि पूजा गर्नु भनी श्रीमहादेवबाट आज्ञा भएको छ ।

श्रीस्वस्थानी माता विराजमान हुनुभएको स्थानमध्ये साँखु पनि एक हो । साँखुबाट दुई किलोमिटर परको शालीनदी ओर्लिने बाटोको दाहिनेतिर श्रीस्वस्थानी माताको मन्दिर छ । अत्यन्तै सुन्दर कलाकृतिले सिँगारिएको यो मन्दिर केही समय पहिले मात्रै निर्माण गरिएको हो । इँटाभन्दा धेरै कलात्मक काठ हालेर बनाइएको यस मन्दिरमा कलात्मक धातुको पनि बग्रेल्ती प्रयोग भएको देखिन्छ । काठमाडौँमा रहेका अन्य देवीदेवताका मन्दिरहरूको स्वरूप र बनावटभन्दा बेग्लै देखिने यस मन्दिरभित्र श्रीस्वस्थानी माताको आकर्षक श्रीमूर्ति शोभायमान देखिन्छ । यस मन्दिरको अगाडिपट्टि मल्लकालीन भीमसेन मन्दिर र पछाडितिर नर्मदेश्वर मन्दिर रहेको छ ।

अप्सराहरूले अह्राएअनुसार भौतिक सामग्रीबिना नै मानसिकरूपमा व्रतादि उपासना गर्दा श्रीस्वस्थानी परमेश्वरीले चन्द्रावतीलाई फल प्रदान गर्नुभएको थियो । पूजन, ध्यानादिमा मनमनै आवाहन गरी श्लोक र सामग्री स्मरण गर्दै क्षमा मागी पानीले मात्र पूजा, व्रत बस्दा पनि सिद्धि पाइन्छ । पार्वती स्वयंले श्रीमहादेव वर पाउन श्रीस्वस्थानी परमेश्वरीको व्रत, उपासना गरेकी र परमेश्वरी प्रसन्न हुनाले उनले श्रीमहादेव पतिको रूपमा प्राप्त गरेको घटनाबाट श्रीस्वस्थानी माताको

महानता झल्किन्छ । पिताको खोजीमा गएका पुत्र नवराज नफर्केको र अति दु:ख पाएकी गोमालाई सप्तर्षिहरूले दिएको अर्ती, उपदेशअनुसार श्रीस्वस्थानी माताको व्रत बस्नाले मनोरथ पूर्ण भएको थियो । श्रीस्वस्थानी परमेश्वरीले चन्द्रावतीले आफ्नो व्रत बसेपछि उनको पाप मोचन गरिदिएर पुन: रूप र लावण्यले भरिपूर्ण पारिदिनुभएको थियो । यस्ती जगज्जननी श्रीस्वस्थानी परमेश्वरीको स्थितिस्वरूपको वर्णन यसप्रकारले गरिएको पाइन्छ–

**अष्टासु च दलेष्वेषु मातृकाष्टस्थितास्तथा ।**
**खड्गं त्रिशूलं चोर्ध्वञ्च अर्द्धे च वरमुत्पलम् ॥**
**चतुर्भुजा त्रिनेत्रा च सर्वालङ्कार भूषिता ।**
**सुवर्णवद्विकाशाभा स्वस्थानी जगदीश्वरी ॥**

अर्थात्, वरिपरि आठवटा पात भएको कमलमा पातैपिच्छे आठवटी मातृकाको माझमा बसेकी, चार हात र तीन आँखा भएकी, एक हातमा खड्ग, एक हातमा त्रिशूल, एक हात वरमुद्रामा र एक हातमा सुन्दर फूल लिएकी, थरिथरिका गहना लाएकी, सुनभन्दा पहेँलो रूपले धपक्क बलेकी श्रीस्वस्थानी जगदीश्वरी माताको स्वरूप छ ।

चारैतिर अष्टमातृकाको बीचमा ॐकारस्वरूपमा बस्नुभएकी श्रीस्वस्थानीलाई भक्तले जुन रूपमा मानेर पुकारे पनि फल मिल्दछ । श्रीस्वस्थानी परमेश्वरीका विविध रूप पाइन्छन्, निश्चितरूपमा एउटै स्वरूप भनेर किटेर बताएको पाइँदैन । अष्टमातृकाको बीचमा रहेको ॐकारलाई कसैले चण्डेश्वरी, कसैले दक्षिणकाली, कसैले काली माताको रूपमा लिने गर्दछन् । भावले मात्र चिन्तन गर्न सकिने श्रीस्वस्थानी माताको नाना रूप र वर्ण भएको मानिन्छ भन्ने धारणा पनि पाइन्छ ।

## घैंटो फुटाउने जात्रा

यहाँ घैंटो फुटाउने जात्रा पनि चल्दछ । वर्षमा एकपटक माधव नारायण व्रत बस्न आउनुभएको र उहाँले व्रत बस्नुभएको बेलामा उहाँको बाटो छेक्ने गरिन्छ । बाटो छेक्न हाँडी, घ्याम्पोहरू फुटाएर राख्ने चलन छ । माधव नारायण बाटो छेक्ने ठाउँमा पुग्नुहुँदा शंख फुकिन्छ । माधव नारायणले बाटो छेकेर बसेको देखेपछि यिनीहरूको दु:ख हटोस् भनेर कामना गर्नुहुन्छ भन्ने विश्वास पाइन्छ । बाटो छेकेर माग्ने प्रचलन नै जात्राको रूपमा लिइन्छ र यसलाई नेवारीमा 'ख्याल पुनी' भनिन्छ । साँखुमा मात्र घ्याम्पो, हाँडी फुटाउने नभई काठमाडौँको हनुमानढोकामा पनि फुटाउने चलन छ । जनबहाललगायत काठमाडौँका अन्य ठाउँमा पनि पूर्णिमाका दिन घ्याम्पो फुटाइन्छ ।

व्रतमहोत्सवको तेह्रौँ दिनमा आफ्ना मनोकामनाहरू पूरा होऊन् भनेर नदीमा खुट्टा डुबाएर एक-एक ओटा ढुंगा टिपेर त्यहाँबाट आफ्नो जिउ नापेर ढुंगा बिसाउँदा जहाँनिर ढुंगा पुग्यो त्यहाँसम्म हिँडेर फेरि ढुंगा टिपेर लड्ने प्रचलन पाइन्छ । यसरी भक्तले आफ्नो जिउलाई नापी-नापी श्रीस्वस्थानीको दर्शन गर्दछन् । विरूपाक्षको समयदेखि यो चलिआएको मानिन्छ । विरूपाक्षले आफ्नो पाप मोचनका लागि यसरी गुल्टिँदै पल्टिँदै अष्टप्रणाम विधिबाट आफ्नो शरीरमा रहेको बाह्र धार्नीको गरगहना खियाएर शिवजीको दर्शन गरेको हुनाले श्रीस्वस्थानीको व्रतमेलामा माताको दर्शनार्थ जिउ नाप्ने प्रचलन चलेको हो । माधव नारायणको जिउ नापेर श्रीस्वस्थानी माताको दर्शन गर्ने कार्यलाई मानवहरूले जिम्मा लिएर उहाँको बदलामा गरिदिने प्रथाको रूपमा यसलाई लिइन्छ ।

## रथ जात्रा

माघ शुक्ल सप्तमीको दिनलाई अचला सप्तमी अथवा अर्घला सप्तमी पनि भनिन्छ । यस दिनलाई सूर्यनारायणले सबभन्दा पहिले रथ चढेर यो विश्वब्रह्माण्ड रातदिन घुम्न प्रारम्भ गरेको दिनको रूपमा लिइन्छ । त्यसैले यस दिन रथ जात्रा गर्ने प्रचलन चलेको हो । माधव नारायण पनि सूर्यनारायणको प्रतीक भएको र त्यस दिन उहाँले साँखु परिक्रमा गर्ने गर्नुहुन्छ । त्यस दिन उहाँलाई रथमा राखेर घुमाउने गरिने भएकोले त्यस दिन सम्पूर्ण पृथ्वी नागैनागले छोपिन्छ भन्ने भनाइ छ । माधव नारायणले रथ हाँकेर हाम्रो जिउमा टेकेर जाऊन् भनेर सबै नागराजहरूले विश्वलाई नै छोप्ने गर्दछन् । माधव नारायणको व्रत बस्ने लोग्ने मानिसहरूले बालुवाको नाग, त्रिशूल, डमरु, शंख, चक्र, गदा साँखुभरि लेखेर जान्छन् । दिउँसो लेखाइको माथिबाट व्रतालुहरू बिस्तारै गुल्टिने गर्दछन् । त्यसबेला एकजना गुल्टिने, एकजनाले पानी छर्कने गर्दछन् । आइमाईहरू पनि त्यसबेलामा सिंगारपटार गरेर अप्सराको रूपमा घुम्ने गर्दछन् । सिंगारपटारमा लिपिष्टिक र पालिश लाउन भने पाउँदैनन् । अन्य बेला आइमाईहरूले सिंगारपटार गर्न पाउँदैनन् । यस दिन सबै ठाउँमा नागैनाग व्याप्त हुने भएकोले व्रतालु आइमाईहरूले सारीको सप्को हल्लाउँदैनन् । सारीको सप्को हल्लियो वा फरफरायो भने नागराजा रिसाउनुहुन्छ भन्ने विश्वास गरिन्छ ।

**ऐतिहासिक तथा धार्मिक स्थल साँखु**

भारतबाट आएका धर्मदत्तले विशालनगरलाई राजधानी बनाई आफ्नो राज्य टोखादेखि साँखुसम्म विस्तार गरेको भनाइ छ । । साँखुलाई नेपालभाषामा 'संको' भनिन्छ । 'सं' भन्नाले तिब्बत र 'को'को अर्थ तल्लो हो । साँखुलाई काठमाडौं उपत्यकाको शिर मानिन्छ । प्राकृतिकरूपमा अत्यन्तै मनोरम यहाँको शालीनदीमा प्रत्येक वर्ष मिलापुह्नी (पौषशुक्ल पूर्णिमा) देखि सिः पुह्नी (माघशुक्ल पूर्णिमा) सम्म लाग्ने स्वस्थानी व्रतकथा मेला र प्रत्येक वर्ष चैत्र पूर्णिमा सक्वः पुह्नीका दिन हुने वज्रयोगिनी जात्राका कारण साँखु धार्मिक नगरको रूपमा प्रख्यात् छ। बौद्ध जोरपाटीबाट १५ कि.मी. पूर्व रहेको साँखु वज्रयोगिनीको आज्ञानुसार राजा शंखदेव र पूजारी जोगदेव वज्राचार्य मिली कलिगत संवत् १८०१ मा निर्माण गराएको उल्लेख छ ।

साँखु नौ टोल, नौ विहार, नौ कुण्ड, नौ नाग राजा, नौवटा ढुंगेधारा, आठवटा ढोका र नगरको वरिपरि अष्टमातृका पीठसहित शंखाकार ढाँचामा बसाइएको बताइन्छ । साँखुमा रहेका प्राचीन नौवटा विहारमा पदम गिरी धर्म धातु महाविहार वज्रयोगिनी (योगेन्धर बहाः), सिद्धि कुल महाविहार धुलायटोल (थथुबहाः), वज्रचक्र महाविहार सालखाटोल (ओपी बहाः), ज्ञानचक्र महाविहार दुगाहिटी (याम बहाः), धर्मधातु महाविहार दथुननी (सुय बहाः), गुणाकर महाविहार सुन्टोल (को बहाः), जयनाकर महाविहार चलाखुटोल (मुसु बहाः), धर्मचक्र महाविहार दुगा हिटी (औ बहाः) र होनाकर महाविहार दथु चुक (दुछै बहाः) थिए । हाल वज्रयोगिनीबाहेक प्रायः सबै लोप भइसकेका छन् । यहाँ

धर्मदत्तको सम्बन्धमा यस्तो भनाइ पनि पाइन्छ कि यिनले सुन बनाउने पारसमणि प्राप्त गर्न देवी वज्रयोगिनीको १२ वर्ष ध्यान गरेका थिए । यिनले गर्ने गरेको तपस्या अति कठिन थियो । तपस्याको लागि यिनी ऐतिहासिक शहर टोखाको सपनतीर्थमा नुहाएपछि घोडा चढेर सधैं साँखु वज्रयोगिनी पुग्ने गर्दथे । यिनको त्याग र तपस्या यस्तो थियो कि यिनले मन्दिरमा रहेको कराइमा तेल तताएर आफूलाई तेलमा पकाई बनेको पाकलाई सधैं नै प्रसादस्वरूप देवीको चरणमा अर्पण गर्दथे । यिनको त्यागी स्वभावबाट देवी प्रसन्न भइन् । १२ वर्ष पुग्न एक दिन बाँकी थियो । सो दिन देवीले पारसमणि बनाउने सूत्र लिन भोलि ठीक समयमा आउने आदेश दिइन् । तर यो कुरा भने चतुर विक्रमादित्यले थाहा पाए । धर्मदत्तलाई देवीले बोलाएकै समय पारेर विक्रमादित्य त्यहाँ गए । देवीले धर्मदत्त सम्झेर विक्रमादित्यलाई सूत्र प्रदान गरिन् । पछि धर्मदत्तले विक्रमादित्यलाई नै राजा बनाई वज्रयोगिनी देवीकै ध्यान, तपस्यामा आफ्नो जीवन बिताए ।

(श्री स्वस्थानी परमेश्वरीको मन्दिर)

नगरलाई सुरक्षा दिने कार्य भएको पाइन्छ । यस्तो कार्यबाट साँखु पनि अछुतो छैन । साँखुलाई महाकालटोलमा महालक्ष्मी, दथुमसालमा चामुण्डा, साधुश्मसानमा ब्रह्मायणी, उपश्मसानमा रुद्रायणी, बांदोलमा वाराही, इतामुगमा इन्द्रायणी, सलंख्वमा कुमारी, इविचासमा वैष्णवी र सलगुंमा सिंहिनी व्याघ्रिनी गरी अष्टमातृका गणले सिंगारेको पाइन्छ । शालीनदीमा माघ महिनाभरि बौद्ध महायानीहरूले कलेजी रंगको लुगा पहिरिने गर्दछन् भने नारायणको नाउँ लिई भगवान् शिवको व्रत बसी वज्रयोगिनीको क्षमापूजा गर्दै स्वस्थानी पढ्ने गर्दछन् ।

**शैल अर्थात् शालीनदी**

यसै साँखुको शंखरापुरमा बोधिसत्व मणिचूड महाराजको वासस्थान मणिशैलबाट बगेर आएको शालीनदी छ । यस नदीलाई नालंदी, नारायणी पनि भनिन्छ । शालीनदीको पुरानो नाम शैलजा नदी हो । यसैको अपभ्रंश

(अप्सराहरू व्रत बसेको भनिएको ठाउँ)

भएर शालीनदी भएको मानिन्छ । पुरानो स्वस्थानीको पुस्तकमा शैलजा नदी भनेर लेखिएको पाइन्छ । नेवारी भाषामा शालीनदीलाई 'नारी' खुसी भनिन्छ । 'ना' को अर्थ पानी र 'री'ले रोकिएको भन्ने अर्थबोध दिन्छ । पानी रोकिएको नदी भन्ने अर्थ हो 'नारी'को । श्रीस्वस्थानी परमेश्वरीको प्रसादलाई तिरस्कार गरेर मिल्काएको हुनाले चन्द्रावती त्यस नदीमा खस्दा पापिनीको शरीरलाई नाघेर नजाने भनेर शालीनदी त्यसबेला रोकिएकी थिइन् । शालीनदीमा प्रत्येक वर्ष पौष मिलापुह्नीदेखि माघ सि: पुह्नीसम्म श्रीस्वस्थानीको व्रतमेला लाग्ने गर्दछ । स्वस्थानी ग्रन्थका अनुसार शालीनदीको तीरमा अप्सराहरू आएर व्रत बस्छन् । यो प्रचलन परापूर्वकालदेखिको हो । बौद्ध ग्रन्थमा उल्लेख भए अनुसार भगवान् विष्णुले देवासुर संग्राममा

रत्नकुण्ड, धर्मकुण्ड, मणिकुण्ड, मानकुण्ड, गुणवान्कुण्ड, पूर्णेन्दुकुण्ड, शितलीकुण्ड, ताराकुण्ड, योगकुण्डमा अनन्त, पद्म, तक्षक, वासुकी, शंखपाल, कर्कोटक, कुलिक, महापद्म र वरुण नागराजलाई विराजमान गराइएको विश्वास गरिन्छ ।

साँखु देशमा निर्मित नौवटा ढुंगेधारामा जोगहिटी, सत:हिटी, द्वगाहिटी, लांकोहिटी, जयवलीहिटी, छपुहिटी, निपुहिटी, स्वपुहिटी र सुपालीख्यहिटी रहेका छन् । नेवार बस्तीहरूमा प्रायश: तन्त्रबलको प्रयोगलाई अपनाएर

वासुकी नाग

शालीनदी

मायासुर भन्ने दैत्यलाई पराजित गर्न नसकेपछि उहाँले देवगुरु वृहस्पतिसँग सल्लाह गर्नुभयो। वृहस्पतिको सल्लाहअनुसार उहाँले शालीनदीमा आएर व्रत बस्नुभएको हो । पहिले शालीनदीको तीरमा वज्रयोगिनीको मन्दिर थियो। वज्रयोगिनी श्रीस्वस्थानीको रूपमा प्रत्यक्ष हुनुभएकोले त्यहाँ गएर स्वस्थानीको व्रत बस्दा मनोकामनाहरू पूर्ण हुने विश्वास रहिआएको छ । विष्णु भगवान् आएर शालीनदीको छेउमा व्रत बस्दा देवी खुसी भई मायासुर दैत्यलाई पराजित गर्ने सामर्थ्य प्रदान गरेको भन्ने भनाइ पाइन्छ। भगवान् विष्णुलाई श्रीस्वस्थानी माताले अवतार लिन सक्ने र ब्रह्माण्डको संचालनको सामर्थ्यता पनि प्रदान गर्नुभयो । यसैकारण उहाँ प्रत्येक वर्ष ब्रह्माण्डको रक्षा गर्ने शक्ति पाऊँ भनी माघ महिनामा माधव नारायणको स्वरूप भएर शालीनदीको तीरमा व्रत बस्ने गर्नुहुन्छ ।

स्कन्दपुराणको केदारखण्डमा श्रीस्वस्थानीको व्रतकथाका अनुसार शालीनदीको छेउमा बसेर अप्सराहरूले श्रीस्वस्थानीको व्रत बसेको प्रसंग पाइन्छ । प्रसंगमा अप्सराहरूले शिवशर्मा ब्राह्मणकी स्त्री गोमा र बुहारी चन्द्रावतीलाई यसै ठाउँमा श्रीस्वस्थानी माताको व्रत विधि सिकाएका थिए। अप्सराहरूले सिकाएअनुसार यसै स्थानमा बसेर गोमा र चन्द्रावतीले श्रीस्वस्थानीको व्रत बसेका थिए । अप्सराहरूका साथ गोमा र चन्द्रावती व्रत बसेको स्थानमा रहेको धर्मशालालाई थपेर धेरै व्रतालु अट्ने बनाइएको छ । श्रीस्वस्थानी परमेश्वरीका व्रतालुहरूलाई सुविधा होस् भनी एक भक्तले २०५५ सालमा पुरानो धर्मशालामा नयाँ थपिदिएको कुरा धर्मशालाको भित्तामा अंकित गरिएको छ । यसभन्दा तल एउटा अर्को धर्मशाला छ जहाँ व्रतमेलामा भक्तजनहरूको जुत्ता राख्ने गरिँदै आइएको छ। यो पनि धेरै पुरानो धर्मशाला हो भन्ने स्थानीयवासीहरूको दावी पाइन्छ ।

चन्द्रवतीले व्रत बसेको भनिएको ठाउँ

शालीनदीमा श्रीस्वस्थानी व्रतको क्रममा पूजित माधव नारायणको मूर्तिलाई पशुपतिनाथमा श्रीस्वस्थानीका व्रतालुहरूले माघ महिनाभरि एकपटक मात्रै भए पनि दर्शन गर्नुपर्ने

गोमाको कुटी

प्रचलन छ । माघे औंसीका दिन आर्यघाटमा साँखुका माधव नारायणको मूर्तिलाई केही क्षण भए पनि विराजमान गराइन्छ। श्रीस्वस्थानीको एउटा मौलिक स्तुति परम्परागतरूपमा भजन घरहरूमा अहिलेसम्म पनि गाइन्छ । मल्लकालको उत्तरार्द्ध र शाहकालको पूर्वार्द्धतिरको हुन सक्ने यस भजन नेपालीमा लेखिएको नभएता पनि काठमाडौं उपत्यकामा श्रीस्वस्थानी व्रतकथा व्रतालुहरूले गाउँछन्। माधव नारायणको मूर्ति पहिले श्रीखण्डको थियो । त्यो मूर्ति जीर्ण हुँदै गएपछि धातुको मूर्ति प्रतिस्थापित गरिएको हो । २ सय वर्ष अगाडि मात्र ढलौटको मूर्तिलाई पूजा जात्रामा प्रचलनमा ल्याइएको हो । शालीनदीको छेवैमा अन्य देवीदेवताहरूको मूर्ति पनि देख्न सकिन्छ। कुनै कुनै अति नै पुराना र कुनै हालैको देखिने यी मूर्तिहरूमा भगवान् कृष्ण, श्रीगणेश, शिवलिङ्ग, सरस्वती आदि छन्। यहाँ सात र पाँच टाउका भएका दुई नागका ढुंगाका मूर्ति पनि राखिएका

श्रीस्वस्थानीको मूर्ति

छन् तर स्थानीय अक्लबहादुरको भनाइमा भने यी पुराना मूर्ति नभई हालैका हुन् ।

काठमाडौं उपत्यका दहको रूपमा रहेको बेलामा मञ्जुश्री आएर चोभारको डाँडो काटेर पानी बाहिर पठाए । त्यसपछि उपत्यकाका जलमा बस्ने प्राणीहरू पनि बाहिरिए । त्यसबेला जन्तुहरूका हरेक चित्रलाई मञ्जुश्रीले यहीं राख्न खोजेपछि वासुकी नागले उपत्यका छोडेर जान चाहे । तर मञ्जुश्रीले नागलाई यहीं रोक्न खोजे । वासुकी भने अन्त नगई शालीनदीको तीरमा बस्न गए । वासुकीको बास यहाँ भएपछि यो ठाउँ ' वासुकी क्षेत्र'को रूपमा परिचित हुन पुग्यो । वासुकी क्षेत्र भन्नाले शालीनदीदेखि पशुपतिसम्म फैलिएको मानिन्छ । वासुकी नागलाई भने कसै-कसैले हरिहर भनेर पूज्दछन् भन्ने स्थानीयवासीहरूको दावी पनि यदाकदा नसुनिने होइन ।

चन्द्रावती कुष्ठरोगी भई बसेको स्थान र त्यस ठाउँमै रहेको गोमाको घर (हाल छाप्रोको रूपमा मात्र देखिन्छ) यहाँ छन् भने यसै ठाउँमा चन्द्रावतीलाई लावण्यदेशमा ल्याउँदा डोली बोक्ने डोलेहरूको रूपमा लिइने गरेका शिलाहरू (अथवा

नवराज

जहाँ डोली बिसाइएको थियो) पनि देखिन्छन् । भनिन्छ, अहिले शालीनदीको जुन प्रवाह छ, त्यसको दिशा पहिले यही ठाउँमा थियो, नदीले आफ्नो बाटो परिवर्तन गरेपछि हाल यो ठाउँ खेतीयोग्य जमीनमा परिणत भएको हो भन्ने भनाइ स्थानीय भक्तिनारायण श्रेष्ठको छ । नदीमाथि रहेको हालको आधुनिक पुल नै त्यो स्थान हो जहाँबाट चन्द्रावती नदीमा खसेकी थिइन् भन्ने विश्वास गरिन्छ ।

साँखुलाई लावण्यदेश पनि भनिन्छ । त्यसबेलाको बनावट र अहिलेको बनावटमा फरक त अवश्यै भयो होला, परिवर्तन त अवश्यै आयो होला । तर गोमाको चन्द्रज्योति नगर (लप्सीफेदी) मा रहेको कुटी भएको क्षेत्रलाई चन्द्रविहार भनेर बौद्ध ग्रन्थमा पाइन्छ । त्यहाँ अहिले पनि गोल्मादेवी भन्ने ठाउँ रहेको छ । कुटी रहेको ठाउँको अलि पर महादेव ज्वाला भन्ने ठाउँ छ जहाँ नवराज नुहाउन जाँदा हरिहर प्रत्यक्ष हुनुभएको मानिन्छ । यस

डोलेहरू

ठाउँमा शालीनदीले नै झरनाको रूप लिएको पाइन्छ ।

माधव नारायण प्रत्येक वर्ष शालीनदीमा नै आएर व्रत बस्नुहुने भएकोले स्वस्थानी व्रतलाई माधव नारायणको व्रत भनेर पनि मान्दछन् । धान्यपूर्णिमाको दिनमा माधव नारायणलाई किस्लीमा चामल, सिंगो सुपारी र पैसा राखेर उहाँले बस्नुपर्ने व्रतलाई मानिसले बसिदिने चलन रहेको छ । ३३ सय वर्षअघिदेखि नै यहाँ माधव नारायणले प्रत्येक वर्ष व्रत बस्दै आउनुभएको भनाइ छ । श्रीस्वस्थानीको घर-घरमा बस्ने व्रत र शालीनदीमा बस्ने व्रतमा अलि भिन्नता छ । घरमा बस्नेहरूले दिनमा एक छाक खाने गर्छन्, जुत्ता लाउँदा पनि हुने हुन्छ, नून खाए पनि हुन्छ । तर शालीनदीमा व्रतालुहरूले एक महिनासम्म नून खान हुँदैन । खाना खाँदा पनि रौँहरू भेटिएमा वा जौ, तिल वा अन्य अन्नादि भातमा आएमा खान छोड्नुपर्ने हुन्छ । धेरै कडा विधानमा रही व्रत बस्नुपर्ने, जथाभावी बोल्न नहुने र आफ्नो

(सात र पाँच टाउका भएका नाग)

मनोकामना पूरा होस् भन्ने भावनाका साथ एकचित्त भएर बस्नुपर्दछ । व्रत अवधिमा बिरामी भएमा माधव नारायणलाई किस्ली चढाउने परम्परा छ । यसो गरेपछि सञ्चो हुने विश्वास गरिन्छ ।

शालीनदीको मेलामा प्रमुखताका साथ पूजा, अर्चना गरिने देवीदेवताहमध्ये ज्योतिर्लिङ्गेश्वर महादेव पनि एक हो । करिब ३ सय वर्ष पुरानो पीपलको रुख नारायण डबली पोखरीका साथ सालखाटोलमा दुईतल्ले प्यागोडा शैलीको मन्दिर ने.सं. ७५४ मा निर्माण भएको मानिन्छ । यहाँ माघे संक्रान्तिका दिन श्रीमहादेवको खटजात्रा गरिन्छ ।

**व्रतको पूर्णता**

अष्टमातृकाको स्थानमा रहेको शालीनदीको पानी बगेर आएको कुलोमा नुहाएर माधव नारायण मन्दिरका पूजारी कहाँ गएर जल लिएपछि मात्र श्रीस्वस्थानी व्रतारम्भ हुन्छ । सांगेको भोलिपल्ट सोही ठाउँमा नुहाएर घर फर्केपछि व्रत पूर्ण भएको मानिन्छ । तर माधव नारायणको व्रतको पूर्णता भने दुई चरणमा हुन्छ । शिवरात्रिको दिनमा सबै व्रतालुहरू

(जुत्ता राख्न प्रयोग भएको पुरानो धर्मशाला)

फेरि आएर जम्मा भएको अवसरमा माधव नारायणका पूजारी, शंखादि फुक्ने मानिसहरूले एक जोडी सर्प, एक जोडी चरा, एक जोडी माछा, कीरा-फट्यांग्राको जोडी आदि सहित लप्सीफेदीको कुनामा रहेको ब्रह्मायणीमा गएर गोप्य तान्त्रिक पूजा, हवन गरेपछि पहिलो चरणको समाप्ति हुन्छ । प्रत्येक जोडीमा एउटालाई छोडिदिने र अर्कोलाई हवनकुण्डमा आहुति दिने चलन छ ।

दशैंमा दोस्रो चरणले पूर्णता पाउँछ । दशमीका दिनमा 'पायो जात्रा' (खड्ग जात्रा) मा माधव नारायणकहाँ पालो बस्ने र उहाँलाई बोक्ने दुवै भित्र गएर टीका लगाएपछि उनीहरू पनि माधव नारायणको स्वरूप भएर 'पायो' हुन्छ । यसरी आफ्नो जिउमा देउता चढाएपछि माधव नारायणको सम्पूर्ण व्रत पूरा हुन्छ ।

शालीनदीमा विभिन्न मनोकामनाले व्रत बस्ने प्रचलन रहेको छ । रोगीहरूले रोग निको होस् भनेर व्रत बस्छन्

माधव नारायण मन्दिर

भने कसैले धन-सम्पत्तिका लागि व्रत बस्ने गर्दछन् । नि:सन्तानहरूले सन्तान प्राप्तिका लागि व्रत बस्ने गर्दछन् । व्रतको फलले सन्तानको प्राप्ति भएपछि बच्चाको नाम प्राय: 'माधव' नै राख्ने गरेको पनि पाइन्छ । साँखुवासीहरूले भने व्रतमेलामा व्रत बस्न नसके पनि एकदिन भए पनि यहाँ आएर दान-दक्षिणा दिने गर्दछन् । दान-दक्षिणामा पैसादेखि लिएर टीका, जौ, तिल, थैली, ओढ्ने आदि दिने गर्दछन् । श्रीस्वस्थानी व्रतलाई राजव्रत मान्ने गरिन्छ । यो व्रतहरूको राजा व्रत अथवा उत्तम व्रत हो । जय गुरुदेव !

*(स्रोत : पदम श्रेष्ठ–नेपाल मण्डल सम्पदा, मोहन मिश्र–नेपाली संस्कृतिमा शिव महिमा, प्रभात सापकोटा–प्राचीन शहर टोखा एक अध्ययन)*

*(परमपूज्य सद्‌गुरुदेव श्री शिव गोरक्षसम्बन्धी विभिन्न सत्य तथ्य कुराहरूको बारेमा जानकारी दिने क्रममा श्री सावर संरचना शक्ति केन्द्र नेपालद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा लिखित 'श्री शिव गोरक्ष-नाथंप्रदाय' ग्रन्थबाट विभिन्न प्रसंगहरू क्रमशः प्रकाशित गर्दै आइरहेका छौं ।)*

# नवनाथ र नाथयोगीहरू

नाथयोगीहरूले समाजको लागि गरेका अतुलनीय योगदान, मानव समुदायका लागि दिएका उच्च आदर्शका दर्शनहरू, आत्मिक उन्नति-प्रगतिका अनगिन्ती विधिविधानहरू, साधनात्मक प्रक्रियाहरू आदिका कारण नै 'नाथ' शब्द सधैं सम्मानित रह्यो, आदरणीय रह्यो र सबैका लागि श्रद्धा, विश्वास र आस्थाको केन्द्र रह्यो । नाथ सम्प्रदायको कुरा गर्दा, यस सम्प्रदायको बारेमा व्याख्या गर्दा सबैभन्दा पहिले यस सम्प्रदायका सिद्धहरूको बारेमा, महायोगीहरूका बारेमा चर्चा गर्नु अपरिहार्य हुन्छ ।

नाथ सम्प्रदायमा नाथ सिद्ध योगीहरूमा, महाविभूतिहरूमा नौजनालाई विशेषरूपमा छुट्टयाइएको पाइन्छ। सम्पूर्णरूपमा उच्चता हासिल गरेका सिद्ध पुरुषहरूलाई एक उच्च र आदरणीय स्थानमा राखी उहाँहरूको महानतालाई आदर गरी नवनाथको संज्ञा दिइएको पाइन्छ । नाथ सम्प्रदायको गौरवशाली परम्पराभित्र विशिष्ट स्थान ओगट्न सफल सिद्ध महायोगीहरूलाई नवनाथको रूपमा आदर, सम्मान गरिएको उल्लेख पाइन्छ । साधारण अर्थमा आफ्नो गुरुबाट दीक्षा ग्रहण गरी उच्चता हासिल गरी योग्य ठहरिएका नौजना दिव्यतम सिद्ध महायोगीहरूको समूहलाई नवनाथ भन्ने गरेको पाइन्छ । नवनाथलाई विभिन्न दिव्यतम शक्तिहरूको साङ्केतिक स्वरूपको रूपमा पनि परिभाषित गरेको पाइन्छ । कतै ब्रह्माण्डमा स्थित नौवटा ग्रहहरूको प्रतिनिधित्व नवनाथले गरेको कुराको उल्लेख पाइन्छ भने कतै शरीरमा स्थित नवचक्रका मूल आराध्यदेवको रूपमा पनि नवनाथलाई आदर गरी व्याख्या गरिएको पाइन्छ । त्यस्तै, कतै भगवान्‌का नौवटा स्वरूपहरू नवनारायणलाई नै नवनाथको रूपमा लिइएको पाइन्छ ।

चाहे जुनसुकै स्वरूपको रूपमा व्याख्या गरे पनि ऐतिहासिक गौरवमय गाथाहरूले नवनाथको महानता एवं उच्चतालाई पूर्णताका साथ स्वीकार गरेको पाउँछौं । सिद्ध देह प्राप्त, परमार्थ प्राप्त, परमात्मा, परब्रह्म, परमेश्वर, आदिनाथकृत योग मार्गमा विशिष्टता प्राप्त व्यक्तित्वहरू

नै नवनाथका संवाहक हुन् । नाथ सम्प्रदायको परम्परामा आफ्नो गुरुबाट दीक्षा ग्रहण गरी उच्चता हासिल गरेका व्यक्तिहरूलाई गुरुले नाम दिने चलन छ । बाल्यकालमा राखेको नाम परिवारिकरूपबाट राखिएको हुन्छ । तर जब व्यक्ति योग्य, सक्षम सद्‌गुरुको शरणमा पुग्दछ, तब सद्‌गुरुले योग्य पात्र ठानेको खण्डमा उसलाई विधिवत्‌रूपमा दीक्षा दिई सुसंस्कारित गर्ने चलन छ । यही सुसंस्कारित गराई दिइने नामले नै योग मार्गको क्षेत्रमा विशिष्ट स्थान राख्दछ। शक्ति, क्षमता एवं सामर्थ्यको परिचायक हुन्छ यसरी दिइने नाम । यसरी वंशपरम्परा, पारिवारिक एवं लौकिक बन्धनहरूलाई पूर्णरूपले त्याग गरी समाजकल्याण, उच्च आदर्श एवं पवित्र भावनाका साथ अघि बढ्ने नयाँ जीवनको परिचायकको रूपमा संस्कारित नामलाई लिइने गरेबाट पनि योगीको परिचय, उच्चता, विशिष्टताको झझल्को पाइन्छ। नवनाथभित्रका दिव्यतम व्यक्तित्वलाई लौकिकरूपमा कुन कुन नामले विभूषित गरिएको छ, त्यसभित्र को को महापुरुष पर्नुहुन्छ भन्ने कुराको बारेमा स्पष्ट ऐतिहासिक प्रमाण पाउन गाह्रो भएता पनि देश, विदेशका विद्वान्, लेखक एवं अनुसन्धानकर्ताहरूले विभिन्न नामहरूलाई नवनाथको रूपमा राखेको पाउँछौँ । नवनाथको रूपमा विभूषित महायोगीहरू वास्तवमा को को महापुरुष हुनुहुन्छ भन्ने कुरामा लेखकहरूबीच निकै विवाद रहेको पाइन्छ । एउटै नाम कतै नवनाथको रूपमा उल्लिखित पाइन्छ भने कतै त्यही नाम चौरासी सिद्धहरूको गणनामा पाइन्छ ।

नवनाथको बारेमा विभिन्न पौराणिक शास्त्रहरूमा पनि उल्लेख पाइन्छ । 'स्कन्दपुराण'को केदारखण्डमा नवनाथको बारेमा यसप्रकार उल्लेख गरिएको छ-

**नवनाथाः समाख्यातास्तत्र श्री आदिनाथकः ।**
**आदिनाथः कूर्माख्यो भवाख्यो गजनाथकः ॥**
**सत्य संतोष नाथौ तु मत्स्येन्द्रो गापिनाथकः ।**
**गोरक्षो नवनाथास्ते नादब्रह्मा रताः सदा ॥**

अग्निपुराणमा नवनाथको गणना यसरी गरेको पाइन्छ–

**सिद्धाश्रम निवासी च विश्वामित्रादिभि सह ।**
**कौलीशनाथः श्रीकंठनाथो गगननाथकः ॥**
**तूर्णनाथः शिवः कृष्णो भवस्ते नव नाथकाः ।**

'भारद्वाज संहिता'मा नवनाथहरूको नाममा निम्न नामहरूको उल्लेख पाइन्छ ।

१. आदिनाथ
२. मीननाथ
३. कन्थडिनाथ
४. गोरक्षनाथ
५. कांकणनाथ
६. विरूपाक्ष
७. जालंधर
८. चौरंगी
९. अरुणाचलनाथ

नवनाथको श्रेणीमा विभिन्न भाषाहरूमा विभिन्न व्यक्तिहरूलाई राख्ने क्रममा 'ज्ञानेश्वरचरित्र'मा पं. लक्ष्मण रामचन्द्रले सन्त ज्ञानेश्वरसम्मलाई नवनाथमा राखी गुरु परम्परालाई यसरी प्रस्तुत गर्नुभएको पाइन्छ–

नवनाथ योगीहरूका बारेमा चर्चा गर्ने क्रममा हामीले विभिन्न नामका महायोगीहरूलाई नवनाथको रूपमा राखिएको कुराको उल्लेख गरिसकेका छौँ। विभिन्न दिव्यतम महायोगीहरू, विभिन्न शक्तिहरूका पूँजीभूत स्वरूपलाई विभिन्न नामले विभूषित गरी नवनाथको रूपमा चर्चा गरेको पाउँछौँ । नवनाथको बारेमा स्पष्ट ऐतिहासिक प्रमाणहरू प्रशस्त पाइए पनि नवनाथको रूपमा पूजित महायोगीहरूका नामहरूको सूची भने बढी विवादास्पद भएको पाइन्छ । नवनाथ भन्नेबित्तिकै विशिष्ट व्यक्तित्वको परिचायक भएको कुरामा कुनै शङ्का छैन, कुनै विवाद छैन । नाथ सम्प्रदायको शुरुआत, यसको विकास र विभिन्न समयमा भएका दिव्यतम नाथयोगीहरूको आधारमा पनि नवनाथको निर्माण भएको पाइन्छ ।

विद्वान्‌हरूद्वारा उल्लिखित एवं शास्त्रहरूमा उल्लेख भएका नवनाथका सूचीहरूका बारेमा केही चर्चा गर्दै उल्लेख भएका सूचीहरूको बारेमा अध्ययन गरौँ । गोरक्ष सिद्धान्त संग्रहमा उल्लेख भएअनुसार-

**एवं श्री गुरुवेरादि नाथः मत्स्येन्द्रनाथः तत्पुत्र उदयनाथः दण्डनाथः सत्यनाथः सन्तोषनाथः कूर्मनाथ भवनार्तिः तस्त्य श्री गोरक्षनाथः ईश्वर सन्तान आदिब्राह्मनः सूक्ष्मवेदी, अद्वैतोपरि सदानन्द देवता अनाहत शृंगी खेचरी मुद्रा ।**

नाथ सृष्टिको अविर्भाव 'नाद'बाट भएको मानिन्छ

जसअनुसार सर्वप्रथम उत्पन्न अनादिदेव आदिनाथ शिव हुनुभयो। त्यसपछि नादशक्तिको कारण नै ईश्वरका सन्तान, शिवावतार, ब्राह्मण, सूक्ष्मवेदी, अद्वैतभन्दा धेरै परका अलख निरञ्जन देवता, अनाहतशृंगी र खेचरी मुद्रारूपयुक्त महायोगीहरू नाथयोगी भए । यसरी निम्नानुसार नाथहरू उत्पन्न हुनुभयो– आदिनाथ, मत्स्येन्द्रनाथ, उदयनाथ, दण्डनाथ, सत्यनाथ, सन्तोषनाथ, कूर्मनाथ, भवनार्तिनाथ र गुरु गोरक्षनाथ ।

नाथ सम्प्रदायमा, नाथ परम्परामा अनुयायी भक्तहरूले नवनाथलाई विभिन्न देवताका रूपमा सम्मान एवं ध्यान गर्ने गरेको पाइन्छ। उक्त कुरालाई धेरै विद्वान्हरूले व्याख्या गरेका छन् । गोरख टिल्लाबाट प्रकाशित 'नवनाथ कथा'मा र अन्य लेखकहरूले पनि व्याख्या गरेअनुसार निम्नानुसार नवनाथलाई मानेको पाइन्छ–

**ज्योतिस्वरुप ॐकार आदिनाथो महेश्वरः ।**
**गौरीशक्तिः क्षमारुपा सा ख्यातोदयनाथतः ॥**
**अपां स्वरुपो ब्रह्मासो सत्यनाथ सविश्रुतः ।**
**विष्णुस्तेजः स्वरुपः सन्तोषनाथ इतिरिसः ॥**
**वायुरुपः शेषनागोऽचलनाथ उदाहृतः ।**
**नमोरुपी गणेशश्च गजकन्थदिकच्यतेः ॥**
**वनस्पतिस्वरुपोऽसौ चतुरंगी च चन्द्रमा ।**
**मायास्वरुपो मत्स्येन्द्रः करुणामय ईरितः ॥**
**ज्योतिःस्वरुपस्त्यक्षश्च गोरक्षोऽयोनिशंकरः ।**
**नवनाथस्वरुपाणि समाम्नातानि योगिभि ॥**

१. ज्योतिस्वरूप ॐकार महेश्वर- आदिनाथ
२. धरणीस्वरूप पार्वती विख्यात्- उदयनाथ
३. जलस्वरूप ब्रह्मा- सत्यनाथ
४. तेजस्वरूप विष्णु- सन्तोषनाथ
५. वायुस्वरूप शेषनाग- अचलनाथ
६. आकाशस्वरूप गणेश- गजकंथडिनाथ
७. वनस्पतिस्वरूप चन्द्रमा- चौरंगीनाथ
८. मायास्वरूप करुणामय- मत्स्येन्द्रनाथ
९. अलक्ष्यस्वरूप अयोनिशंकर- त्रिनेत्र गोरक्षनाथ

नवनाथको सूचीमा निम्न नाथयोगीहरूको नाम पनि उल्लेख गरेको पाइन्छ, जसले विभिन्न क्षेत्रका विद्याहरूको बारेमा स्पष्टरूपमा प्रतिनिधित्व गरेको पाइन्छ-

१. आदिनाथ
२. मत्स्येन्द्रनाथ
३. गोरक्षनाथ
४. जालन्धरनाथ
५. दत्तात्रेय
६. देवदत्त
७. जड भरत
८. नागार्जुन
९. सहश्रार्जुन

नवनाथको सूची विभिन्न स्थान विशेषमा विभिन्न विद्वान्हरूले विभिन्न समयमा प्रकाशित गरेका छन् । यस्तै सूचीमध्येको सन् १४०० मा तेलुगु भाषामा प्रकाशित 'नवनाथ चरित्रम्'मा उल्लेख भएअनुसार-

१. शिवनाथ
२. मीननाथ
३. सारंगधर
४. गोरक्षनाथ
५. मेघनाथ
६. नागार्जुन
७. सिद्धबुद्ध
८. विरूपाक्ष
९. कणिक

नवनाथका सिद्धहरूको महिमा त्यसबखतका कविहरूले कवितामा, कथाकारहरूले कथाको रूपमा पनि उल्लेख गरेको पाउँछौं । गोरखनाथ मन्दिर गोरखपुरबाट प्रकाशित योगी सम्प्रदायविस्तृतिमा उल्लिखित नवनाथका बारेमा लेखिएको यो कविता यहाँ प्रस्तुत गरिएको छ-

नमो नवनाथेभ्य

## नवनाथनाम - कविता

आदिनाथ महेश आकाश रूप छाय रहे,
उदयनाथ पार्वती पृथ्वी रूप भाये हैं ।
सत्यनाथ ब्रह्माजी जिनका है जल रूप,
उन्ही ने तो कृपा कर सृष्टि को रचाये हैं ।
सन्तोषनाथ विष्णु तेज खाण्डा खड्ग रूप,
राजपाट अधिकारी वही तो कहाये हैं ।
अचल अचम्भेनाथ जिनका है शेष रूप,
पृथ्वी का भार सब शीश पर उठाये हैं ।
गजवेली गजकंथडनाथ ऋद्धि सिद्धि देनहार,
हस्ति रूप धार गणपति कहलाये हैं ।
ज्ञान पारखी चन्द्रमा सिद्ध है चौरंगीनाथ,
अठारह भार वनस्पति में वो ही समाये हैं ।
मायापति दादा गुरु कृपालु मत्स्येन्द्रनाथ,
सब ही का अन्न धन कपडा पुराये हैं ।
गुरु तो गोरक्षनाथ स्वयं ज्योति स्वरूप जो,
विश्वभर योगशक्ति उदार फैलाये हैं ।
बडे हैं वे भाग्यवन्त जिन योग प्राप्त किया,
नवनाथ नवनाथ गुरु गुण गाये हैं ।
नाथ ये त्रिलोक नवनाथ को नमन करे,
नवनाथ नाम शुभ मेरे मन भाये हैं ।
दोहा–श्री नवनाथ को बिनऊ, दीजिये शुभ आशीष ।
आप ही मम सर्वस्व हैं, आप ही हैं मम ईश ॥
करें कृपा मुझ दीन पर, करुं सुयश गुणगान ।
नवनाथ माला शुभ रचूँ, कीजिये बुद्धि प्रदान ॥
जिसके पठन श्रवण से, मिटै त्रिविध भवताप ।
अचल मोक्षपद पावही, जपि है जो नित आप ॥

## ।। नवनाथ-स्वरूप ।।

आदिनाथ सदाशिव हैं जिनका आकाश रूप,
उदयनाथ पार्वती पृथ्वी रूप जानिये ।
सत्यनाथ ब्रह्माजी जिनका जल स्वरूप,
विष्णु सन्तोषनाथ तेजरूप मानिये ।
अचल हैं अचम्भेनाथ जिनका है शेष रूप,
गजबेली गजकन्थडनाथ हस्तिरूप जानिये ।
ज्ञानपारखी जो सिद्ध हैं वो चौरङ्गीनाथ,
अठारह भार वनस्पति चन्द्ररूप मानिये ।
दादा श्री मत्स्येन्द्रनाथ जिनका है माया रूप,
गुरु गोरक्षनाथ ज्योतिरूप जानिये ।
बाल ये त्रिलोक नवनाथ को नमन करे,
नाथजी यह बाल को अपना ही मानिये ।

# परमपूज्य सद्गुरुदेवको अवतरण यात्रा

***यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको रहस्य नै रहस्यले भरिएको अवतरण यात्रालाई क्रमशः प्रकाशित गर्दै आएका छौं । आशा छ यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।***

## विचित्र संन्यासी, सिद्ध पुरुष तथा श्रेष्ठ शिष्य

गुरुदेव यस्तो संन्यासी रहनुभयो जसलाई आफ्नो शरीरदेखि पनि वैराग्य थियो । उहाँले संन्यासको मर्यादाको पनि पुनर्स्थापना गर्नुभयो र फेरि गृहस्थीको मर्यादाको पुनर्स्थापनामा पनि उहाँ लागिपर्नुभयो किनकि त्यो उहाँको गुरुको आज्ञा थियो र केवल गुरु आज्ञा पालनको लागि उहाँले आफैलाई जलाई सतत कार्यरत हुनुभयो । यस्तो कार्य एउटा श्रेष्ठ शिष्यले मात्र गर्न सक्तछ ।

स्वामी श्री निखिलेश्वरानन्दज्यू सम्पूर्ण पहाडी प्रदेशमा सर्वाधिक लोकप्रिय अनि महत्त्वपूर्ण संन्यासी रहनुभएको थियो । साहसी, हिम्मतवान्, धैर्ययुक्त अनि मानवताका उच्च आदर्शहरूलाई आपूरित गरिदिनु उहाँका गुणहरू हुन् । उहाँले आफ्नो पैतालाले नै सम्पूर्ण पर्वतीय प्रदेशहरू घुम्नुभयो र लगभग १०८ हनुमान् मन्दिरहरूको स्थापना गर्नुका साथै हजारभन्दा बढी प्राचीन मन्दिरहरूको जीर्णोद्धार गर्नुभयो । ती मन्दिरहरूमा पूजा आदिको समुचित व्यवस्था गर्नुभयो । करिब २४ भन्दा बढी देवी-मन्दिर र ६८ जति अन्य विभिन्न मन्दिरहरूको निर्माण गराई दैदीप्यमान मूर्तिहरूको स्थापना गर्नुभयो जो प्राणप्रतिष्ठायुक्त अनि प्रभावशाली छन् । यी सबै कार्यहरूद्वारा श्रद्धा अनि देवत्वको भावना समाजमा प्रवाहित भयो । त्यसको लागि आज पनि त्यो पर्वतीय जनसमाजले स्वामी श्री निखिलेश्वरानन्दज्यूप्रति कृतज्ञता ज्ञापन गर्दछ र अन्य कसैको नाम उनीहरूको जिब्रोमा होस् वा नहोस् तर स्वामी श्री निखिलेश्वरानन्दज्यूलाई उनीहरू राम्रोसँग चिन्दछन् । यहाँसम्म कि बच्चा बच्चाको मुखमा समेत उहाँको नाम बसेको छ ।

गुरुदेवले आफ्नो तपस्या तथा साधना शक्तिको बलले आफ्नो सम्पर्कमा आउने सम्पूर्ण व्यक्तिहरूको समस्या समाधान गर्नुभएको छ । उहाँ वास्तवमा नै सबै क्षेत्रमा समानरूपले गतिशील हुनुहुन्छ, सिद्ध हुनुहुन्छ ।

एकपटक योगेश्वर दादा गुरुदेव स्वामी सच्चिदानन्दज्यूले आफ्नो प्रिय शिष्य निखिलसँग सोध्नुभयो– तिमीलाई जे इच्छा छ माग, बाबु । अनि उहाँको शिष्यले गुरु चरणतिर हेर्दै छोटो उत्तर दिनुभयो– त्वदीयं वस्तु गोविन्द तुभ्यमेवं समर्पयेत् ।

जब हे गुरुदेव ! सबै चीज हजूरकै हो भने त्यो सबै हजूरलाई नै चढाउँछु । फेरि मेरो के पो छ र, माग्नलाई ? अनि पूज्य दादा गुरुदेव सच्चिदानन्दज्यूले आफ्नो प्रिय शिष्यलाई चरणबाट उठाई हृदयमा टाँस्नुभयो । यस्तो पो हुन्छ श्रेष्ठ शिष्यत्व ! जय गुरुदेव !

**महोत्कांचं रूपं विवशति भवद् भू प्रतिरतं**
**दिवे नित्यं चिन्त्यं विवशत महोत्स्पर्श क्रियते ।**
**नवोन्मेषं रूपं पदम पर गंध श्रुवयति,**
**भवेत्पूर्ण पुण्यं पुरुषममरोत्त भव नितिः ॥**

हे गुरुदेव ! हजूरको सारा शरीर देवताहरूको झैं अत्यन्त सुन्दर, आकर्षक, कामदेवको झैं पुष्ट अनि यौवनदायक छ । हजूरलाई यदि कुनै स्त्री वा पुरुषले देख्छ भने एकटक हेरेको हेर्‍यै हुनुबाहेक अरू कुनै कार्य बाँकी रहन्न । हजूरको विशाल अनि चौडा स्कन्धले हिमालयको स्मरण गराइदिन्छ भने वक्षस्थल यस्तो लाग्छ मानौं आँधी र हुरीले समुद्र उर्लिरहेछ । सारा शरीर एउटा विशेष साँचोमा ढालिएको अत्यन्तै सम्मोहक अनि आकर्षक प्रतीत हुन्छ र त्यसमा चुम्बकीय आकर्षणसमेत थपिएको छ । प्रत्येक स्त्री-पुरुष नजीक आउनलाई आतुर भए पनि विवशतापूर्वक उभिएर हेरिरहन्छन् । वास्तवमा हजूरको यो दिव्य देहबाट पद्मगन्ध अनि अष्टगन्ध प्रवाहित भइरहन्छ जो देवताहरूको लागि पनि दुर्लभ अनि सोह्र कलायुक्त पुरुषोत्तमको प्रतीक हो । म हजूरलाई भक्तिभावले प्रणाम गर्दछु ।

# ॐकार ध्यान विधि

**धारावाहिक अभ्यास भाग २**

पहिलो लेभल ध्यानको दोस्रो विधिको रूपमा ॐ कार विधि रहेको छ। ॐ शब्द आफैमा दिव्य शक्तिपुन्जको रूपमा रहेको छ । ॐ को शब्द बनावटलाई हेर्‍यौं भने तीनवटा अक्षहरू मिलेर बनेका पाउँछौं ।

अ+उ+म = ॐ

यी तीन अक्षरहरू क्रमशः ब्रह्मा, विष्णु र महेश्वरसँग सम्बन्धित छन्– ब्रह्माको 'अ', विष्णुको 'उ' र महेश्वरको 'म' ।

ॐ कारलाई 'प्रणव' पनि भनिन्छ। सधैं नयाँ देखिने, सधैं रहस्यमय देखिने, सधैं बुझ्न नसकिने स्वरूपमा रहने भएकोले ॐलाई प्रणव भनिएको हो ।

यसरी ब्रह्मा, विष्णु र महेश्वर ॐ शक्तिबाट निर्माण भएको पाउँछौं । 'अ'स्वरूपमा ब्रह्मा सृष्टिकर्ता हुनुहुन्छ, सृष्टिको सम्पूर्ण शक्तिको मूलाधार हुनुहुन्छ । त्यस्तै, 'उ'स्वरूपमा विष्णु सृष्टिलाई पालन गर्ने पालनहार हुनुहुन्छ अर्थात् सारालाई व्यविस्थतरूपमा संरक्षण गर्ने शक्ति हुनुहुन्छ भने 'म'स्वरूपमा सृष्टिलाई नाश गर्ने संहारकर्ता महेश्वर हुनुहुन्छ ।

त्यसैले ॐ कारको यस ध्यानको आफैमा दिव्यतम महत्त्व रहँदै आएको छ । ॐ कारको उच्चारणसँगै हाम्रो शरीरको नाभी, हृदय, शरीरमा एक किसिमको करेन्ट उत्पन्न हुन्छ जसले यो क्षेत्रलाई विकसित गराई दिव्य ऊर्जाको अनुभूति दिलाउँछ ।

ॐ कारको बनोट 'अ', 'उ' र 'म'बाट भएको पाइन्छ जसमा ब्रह्माको 'अ', विष्णुको 'उ' र महेश्वरको 'म'बाट ॐ निर्माण भएको हुन्छ । त्यसैले पनि ॐ को उच्चारणसँगै त्रिदेव (ब्रह्मा, विष्णु र महेश्वर) को आशीर्वाद प्राप्त हुन्छ। हाम्रो शरीरमा ब्रह्माको नाभी क्षेत्रमा, विष्णुको हृदयमा र महेश्वरको सहस्रार अर्थात् शिरमा निवास रहेको पाइन्छ । त्यसैले ॐ को उच्चारण गर्दा पनि तिनै क्षेत्रमा कम्पन (Vibration) हुने गरी गर्नुपर्दछ ।

**तरीका** :

१. अनुकूल मिल्ने वस्त्र लगाउने, भएमा सल, मालाहरू लगाउने ।
२. धेरै समय बस्दा अप्ठ्यारो लाग्ने आसनमा नबसी सजिलो लाग्ने, अनुकूल हुने सुखासन, अर्धपद्मासन वा अन्य आसनमा बस्न सकिनेछ ।
३. आफ्नो अगाडि गुरुहरूको फोटो वा आफूले मानी आएका देवीदेवता वा इष्टहरूको फोटो राख्ने, अगरबत्ती बाल्ने, अनुकूल भए दीयो बाल्ने ।
४. सहस्रारमा परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरुरूपमा धारण गर्ने, हृदयमा आफूले मानेका देवीदेवताहरूलाई धारण गर्ने ।
५. तीनपटक ॐ कार गर्ने र तलको श्लोक तीनपटक उच्चारण गर्ने–

**गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः**
**गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः ॥**

६. त्यसपछि दुवै हात रगडेर आँखा सेक्ने र आफ्नो अगाडि ढोगिदिने ।
७. २१ पटक ॐ कारको उच्चारण गर्ने ।
८. आज्ञा चक्रमा सम्झेर ध्यान गर्ने ।
९. ध्यान आफ्नो अनुकूलताअनुसार १५ मिनेटदेखि ३०, ४५, ६० मिनेटसम्म गर्न सकिनेछ ।
१०. तीनपटक ॐ कार उच्चारण गर्ने ।
११. तीनपटक तलको श्लोक उच्चारण गरेर भन्ने–

**गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः**
**गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः ॥**

१२. दुवै हात रगडेर शिरमा सेक्ने, आँखामा सेक्ने, घाँटीमा सेक्ने, छातीमा सेक्ने, नाभीमा सेक्ने, पुनः दुवै हात रगडेर आँखा सेक्ने, आफ्नो हत्केला हेर्दै अगाडि ढोगिदिने ।

जय गुरुदेव !

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरुप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौं ।**

**श्रीगुरुं परमानन्दं**
**वन्दे ह्यानन्दविग्रहम् ।**
**यस्य सन्निधिमात्रेण**
**चिदानन्दायते नमः ॥२०१॥**

भावार्थ : जसको नजिक बस्नाले नै मन चिदानन्दमय हुन्छ त्यस्ता आनन्दमय विग्रहयुक्त परमानन्दस्वरूप श्री सद्‌गुरुलाई म बारम्बार नमस्कार गर्दछु । गुरुको शरीर साधारण मानिसको शरीरजस्तो होइन, उहाँको शरीर त तपस्याको ऊर्जाले परिपूर्ण, आनन्दरूप तथा यति ओजस्वी हुन्छ कि जुनसुकै प्राणी, साधक वा शिष्य उहाँको सामीप्यता प्राप्त गर्ने बित्तिकै तन्मय हुन जान्छ । तसर्थ, गुरुको निकटता प्राप्त गर्ने प्रयास गर्नुपर्दछ ।

**नमोऽस्तु गुरवे तुभ्यं**
**सहजानन्द रूपिणे ।**
**यस्य वागमृतं हन्ति**
**विषं संसारसंज्ञकम् ॥२०२॥**

भावार्थ : जसको अमृतमय वाणी (उपदेश) ले संसार (अर्थात् जन्म-मृत्यु) विष स्वतः नष्ट हुन्छ त्यस्ता सहजानन्दमा निरन्तर निमग्न रहने सद्‌गुरुलाई बारम्बार नमस्कार छ । जीव स्वतः नै आनन्दस्वरूप हुन्छ, जन्म-मृत्युरहित हुन्छ र ज्ञानस्वरूप हुन्छ तर अज्ञानवश जन्म-मृत्यु आदिलाई आफूमाथि आरोपित गरेर दुःख भोग गर्छ । गुरुले यस्ता मिथ्या ज्ञानलाई समाप्त गरेर शिष्यलाई उसको स्वरूपसँग परिचित गराउनुहुन्छ ।

**अच्युताय नमस्तुभ्यं**
**गुरवे परमात्मने ।**
**सर्वतंत्र स्वतंत्राय**
**चिद् घनानन्द मूर्तये ॥२०३॥**

भावार्थ : अविनाशी, परमात्मस्वरूप, शास्त्रहरूको बन्धनबाट स्वतन्त्र, चैतन्य र आनन्दस्वरूप हे गुरुदेव ! हजूरलाई बारम्बार प्रणाम छ । गुरु शिष्यका लागि सदैव वन्दनीय र स्मरणीय हुनुहुन्छ, उहाँ नै उसका आराध्यदेव हुनुहुन्छ, उहाँ नै शिष्यको सर्वस्व हुनुहुन्छ, शिष्यको जीवनमा गुरुबाहेक अरू केही पनि हुँदैन किनकि यस संसारमा कुनै पनि सम्बन्ध सत्य र स्वार्थरहित छ भने त्यो गुरु-शिष्य सम्बन्ध नै हो । उहाँको शिष्य सूर्यसमान तेजस्वी हुन सकोस् भनेर नै गुरु यस धरातलमा आउनुहुन्छ ।

**नमोऽच्युताय गुरवे**
**विद्याऽविद्यास्वरूपिणे ।**
**शिष्यसन्मार्ग पटवे**
**कृपा पीयूष सिन्धवे ॥२०४॥**

भावार्थ : विद्याको अर्थ हो– शास्त्र ज्ञान, अविद्याको अर्थ हो– म जन्म लिन्छु, म मर्छु आदि अज्ञान । गुरु तत्त्व दुई स्वरूपले युक्त छ । अच्युतको अर्थ हो– जसको कहिल्यै पतन हुँदैन, एकरस भएको संसारमा बाटो बिराएका शिष्य र साधकहरूलाई सुगम उपायले अध्यात्म मार्गमा प्रवृत्त गर्ने, करुणारूपी अमृतका सागर श्री गुरुलाई म पुनः पुनः नमस्कार गर्दछु । गुरुको कृपा मात्रैले पनि साधक यस विषम संसारबाट सजिलै पार हुन्छ ।

**ओमच्युताय गुरवै**
**शिष्य संसार सेतवे ।**
**भक्तकार्यैक सिंहाय**
**नमस्ते चित्सुखात्मने ॥२०५॥**

भावार्थ : अविनाशीस्वरूप, संसार-सागरबाट शिष्यलाई पार गराउन पुल समान, आफ्ना शिष्य वा साधकहरूका मनोवाञ्छित कार्यहरूलाई सदैव सफलता प्रदान गर्ने आनन्दस्वरूप गुरुलाई पुनः पुनः नमस्कार छ । गुरु सदा नै शिष्यको हितका लागि अत्यन्त करुणाका साथ तयार रहनुहुन्छ । शिष्य अनेक जन्मदेखि बाटो बिराएको र संतप्तावस्थामा हुन्छ, त्यस्तो अवस्थाबाट गुरुले शिष्यलाई अत्यन्त विनम्रताका साथ उसको मनोभाव बुझेर आध्यात्मतर्फ प्रेरित गर्नुहुन्छ ।

**गुरु नामसमं दैवम्**
**न पिता न च बान्धवाः ।**
**गुरु नामसमः स्वामी**
**नेदृशं परमं पदम् ॥२०६॥**

भावार्थ : गुरु नामसमान न कुनै देवता छ, न कुनै पिता छ, न कुनै बान्धव छ, न कुनै स्वामी छ, न यस परम पदसमान कुनै पद नै छ । केवल एउटा गुरु नाम मात्रै सर्वोच्च छ । जब साधक समर्पणको सीमामा पुग्छ अनि उसले गुरुबाहेक अरू केही पनि रुचाउँदैन किनकि उसको लागि सांसारिक सबै सम्बन्ध गौण हुन जान्छ । कारण यी सांसारिक सम्बन्ध स्वार्थले टाँसिएका हुन्छन् । गुरु-शिष्यको पावनतम सम्बन्ध देवताहरूका लागि पनि ईर्ष्याको विषय हुन्छ । जय गुरुदेव !

# आफ्नो हात आफै हेरौं

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौं । आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ ।*

### १. वृहस्पतिवलय :

यसलाई अंग्रेजीमा 'रिंग अफ जुपिटर' भनिन्छ । नेपालीमा गुरुमुद्रा वा गुरुरेखा पनि भनिन्छ । यो चोरी औँलाको तल वृहस्पति पर्वतमा चोरी औँलाको ठीक मुनि अर्द्धचन्द्राकार बनाएर त्यसको पूरै क्षेत्रलाई घेरेर रहेको हुन्छ जुन बूढी औँलाजस्तै देखिन्छ ।

### २. मंगल रेखा:

यसलाई अंग्रेजीमा 'लाइन अफ मार्स' भनिन्छ । यो रेखा बूढी औँलाको छेउबाट जीवन रेखाको मूल उद्‌गमस्थलबाट निस्केर मंगल क्षेत्र हुँदै शुक्र पर्वततिर जान्छ, यसै रेखालाई मंगल रेखा भनिन्छ । तर यसको उद्‌गम स्थान भने निश्चित हुँदैन । कसैको हातमा यो जीवन रेखाको बीचबाट त कसैको हातमा यो रेखा जीवन रेखाको समानान्तर गएको पनि देखिन्छ । जब यो रेखा शुक्र पर्वततिर जान्छ तब यो जीवन रेखाबाट छुट्टिएर जान्छ । हातमा यो रेखाको धेरै महत्त्व रहेको मानिन्छ ।

### ३. शनिवलय:

नेपालीमा शनिमुद्रा, शनिरेखा वा शनिवलय भनिने यसलाई अंग्रेजीमा 'रिंग अफ सेटर्न' भनिन्छ । यो रेखा माझी औँलाको फेदमा शनि पर्वतलाई घेरेर एउटा छेउ चोरी औँला र माझी औँलाको बीचमा एवं अर्को छेउ माझी र साहिँली रेखाको बीचमा रहन्छ । यसरी यो रेखाले शनि पर्वतलाई घेरेर रहेको हुन्छ । हातमा यो वलयको निकै महत्त्व रहन्छ ।

### ४. रविवलय:

सूर्य मुद्रा वा सूर्यवलय भनिने यसलाई अंग्रेजीमा 'रिंग अफ सन' भनिन्छ । यो रेखाले साहिँली औँलाको फेदमा औँठीले जस्तै सूर्य पर्वतलाई घेरेको हुन्छ । यो रेखाको एक छेउ माझी र साहिँली औँलाको बीचमा हुन्छ भने अर्को छेउ साहिँली र कान्छी औँलाको मूल स्थानको बीचमा पाइन्छ । जसको हातमा यो वलय देखिन्छ, त्यो यसै रूपमा देखिन्छ ।

### ५. शुक्रवलय:

संस्कृत-नेपालीमा भृगुरेखा, शुक्ररेखा वा शुक्र वलय भनेर चिनिने यसलाई अंग्रेजीमा 'गर्डल अफ भेनस' भनिन्छ । यो वलय चोरी र माझी औँलाको बीचबाट प्रारम्भ भएर साहिँली र कान्छी औँलाको बीचमा गएर समाप्त हुन्छ । यसरी यो रेखाले शनि एवं सूर्य दुवै पर्वतलाई घेरेर रहेको हुन्छ । धेरैको हातमा यो वलय दोहोरो रेखाबाट बनेको हुन्छ । यसको नाम शुक्रवलय भए पनि

शुक्र पर्वतसित भने यसको कुनै सम्बन्ध रहेको देखिँदैन । व्यक्तिको हातमा यस वलयको महत्त्वपूर्ण स्थान रहेको पाइन्छ ।

### ६. चन्द्र रेखा:

यो धनुष आकारको हुन्छ एवं चन्द्र क्षेत्रबाट प्रारम्भ भएर वरुण तथा प्रजापति क्षेत्र हुँदै बुध पर्वतमा गएर रोकिन्छ । यो रेखा कमै मात्र व्यक्तिहरूको हातमा देख्न पाइन्छ ।

### ७. प्रभावक रेखा:

अंग्रेजीमा 'लाइन अफ इन्फ्लुएन्स' भनिने यो रेखा जुन रेखाको साथमा हुन्छ त्यस रेखाको प्रभावलाई बढाउने काम गर्दछ । यो रेखा चन्द्र क्षेत्र तथा वरुण क्षेत्रमाथि हुँदै भाग्य रेखासम्म पुगेको हुन्छ । कसैको हातमा यो रेखा दोहोरो र कसैको हातमा तेहेरो पनि देखिन्छ । यसको प्रारम्भ शुक्र पर्वतबाट पनि देखिन्छ तर यस्तो भने धेरै कम हातमा पाइन्छ ।

### ८. यात्रा रेखा:

अंग्रेजीमा यसलाई 'ट्रेभलिंग लाइन' भनिन्छ । यसले वायुयानयात्रा, जलयात्रा वा पैदलयात्रा वा कुनै पनि प्रकारको यात्रालाई स्पष्ट गर्दछ । तर सूक्ष्मताले हेर्ने हो भने ज्ञात हुन्छ कि यस रेखामा अलग-अलग प्रकारका चिह्न हुन्छन् जसबाट यात्राको भेद ज्ञात गर्न सकिन्छ । यो रेखा चन्द्र रेखामा वा शुक्र क्षेत्रबाट मंगल क्षेत्रतिर गई राहु क्षेत्रलाई पार गरेर चन्द्र पर्वततर्फ गइरहेको देखिन्छ । यस्ता रेखाहरू मोटा तथा पातला दुवै प्रकारका पाइन्छन् ।

### ९. सन्तति रेखाहरू:

यी रेखाहरूलाई 'लाइन्स अफ चिल्ड्रेन' पनि भनिन्छ । यी रेखाहरू बुध पर्वत नजिकैको विवाह रेखामा उभिएका रेखाको रूपमा देखिन्छन् । यिनलाई नाङ्गो आँखाले भने देख्न सम्भव छैन ।

### १०. मणिबन्ध रेखाहरू:

यी रेखाहरू नाडीमा पाइन्छन् । तर यिनको संख्या अलग-अलग हातहरूमा अलग-अलग हुन्छन् । कसैको हातमा एउटा, कसैको हातमा दुई वा चार मणिबन्ध रेखाहरू देख्न सकिन्छ ।

### ११. आकस्मिक रेखाहरू:

यी रेखाहरू समय-समयमा बन्दै रहन्छन् र राम्रा नराम्रा समयतिर यिनले संकेत गर्दछन् । यी रेखाहरू स्थायी हुँदैनन् । जब यिनको क्षणिक प्रभाव समाप्त हुन्छ तब यी मेटिन्छन् । यी रेखाहरू हत्केलामा जहाँसुकै पनि बन्न सक्छन् र बनेर मेटिन सक्छन् ।

### १२. उच्च पद रेखा:

यो रेखा मणिबन्धबाट प्रारम्भ भएर केतु क्षेत्रतिर गएको देखिन्छ । यदि यो रेखा गहिरो र स्पष्ट छ भने व्यक्तिले निश्चय नै उच्च पद प्राप्त गर्दछ । जय गुरुदेव !

क्रमश:

# पौष महिनाको सूक्ष्म काल विवरण

**आदरणीय पाठकवृन्द, विभिन्न महिनाका विभिन्न बारहरुमा पर्ने कालहरुको जानकारी तथा सूक्ष्म काल निर्णयका सम्बन्धमा विगतका अङ्कहरूमा प्रकाशित गरिएको थियो । यस अंकमा पौष महिनामा पर्ने विभिन्न चारवटा कालहरुको पनि ५-५ मिनेटको अन्तरालको फलहरुलाई प्रस्तुत गरिएको छ जसलाई हेर्न सँगै दिइएको तालिकालाई आधार बनाउनु होला ।**

## पौष महिनाको महेन्द्र काल

१ देखि ५ मिनेटसम्म : यात्रा, विजय कार्य, धन संग्रह, खरिदारी र शुभ कार्यका लागि यो समय अनुकूल छ । यस समयका अधिष्ठाता 'ब्रह्मा' हुन्, पान खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

६ देखि १० मिनेटसम्म : यात्रा, विवाह, व्यापार कार्य, मित्रता, उन्नति कार्य आदिका लागि यस समयको चुनाव गर्नुपर्दछ । यस समयका अधिष्ठाता 'मरुत्' हुन्, तिलको भक्षण शुभ मानिन्छ ।

११ देखि १५ मिनेटसम्म : व्यापार, सफलता, शिक्षा, खेल, प्रणय-प्रसंग, विवाह, यात्रा आदिका लागि यस समयको चुनाव गर्नुपर्दछ । यस समयका देवता 'गौतम' हुन्, कार्य प्रारम्भ गर्नु अघि पान खानु शुभ मानिन्छ ।

१६ देखि २० मिनेटसम्म : यात्राको दृष्टिले यस समयको विशेष महत्त्व छ । यस समयका अधिष्ठाता 'गणेश' हुन्, गणेशको स्मरण गरेर यात्रा गर्नुपर्दछ । दूबोको चर्वण शुभ मानिन्छ ।

२१ देखि २५ मिनेटसम्म : यात्रा, विजय कार्य, धन संग्रह, खरिदारी र शुभ कार्यका लागि यो समय अनुकूल छ । यस समयका अधिष्ठाता 'ब्रह्मा' हुन्, पान खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

२६ देखि ३० मिनेटसम्म : यात्रा, द्युत कार्य, हानि-लाभ, सट्टा, भाग्य परीक्षा, मित्रता, लाभदायक कार्य आदिका लागि यो समय उचित छ । यस समयका स्वामी 'कार्तवीर्यार्जुन' हुन्, दहीको भक्षण शुभ मानिन्छ ।

३१ देखि ३५ मिनेटसम्म : कुनै पनि प्रकारको उन्नति, व्यापार, नोकरी, यात्रा आदिका लागि यो समयको चुनाव गर्नु शुभ मानिन्छ । यस समयकी देवी 'गौरी' हुन्, हरिद्रा भक्षण शुभ मानिन्छ ।

३६ देखि ४० मिनेटसम्म : कुनै पनि प्रकारको यात्रा एवं सफलताका लागि यो समय विशेष शुभ एवं अनुकूल छ । यस समयका देवता 'सूर्य' हुन्, शख्खर खाएर यात्रा प्रारम्भ गर्नुपर्दछ ।

४१ देखि ४५ मिनेटसम्म : उन्नति कार्य, विवाह, प्रणय, प्रेम-प्रदर्शन, लाभ कार्य, खेल, यात्रा आदिका लागि यो समय शुभ छ । यस समयका अधिष्ठाता देवता 'कामदेव' हुन्, मह खाएर कार्य प्रारम्भ गर्दा विशेष शुभ हुन्छ ।

४६ देखि ५० मिनेटसम्म : चुनाव, परीक्षा, सफलतासम्बन्धी कार्य, स्थिर कार्य, भाग्योदयका लागि यस समयको चुनाव गर्नुपर्दछ । यस समयका स्वामी 'विष्णु' हुन्, चामल खाएर कार्य गर्नु विशेष शुभ मानिन्छ ।

५१ देखि ५५ मिनेटसम्म : व्यापार कार्यका लागि यस समयको चुनाव गर्नु विशेष शुभ छ । यस समयका देवी 'लक्ष्मी' हुन्, दूध-प्रसाद भक्षण गरेर कार्य प्रारम्भ गर्नु विशेष शुभ मानिन्छ ।

५६ देखि ६० मिनेटसम्म : शुभ कार्य एवं व्यापारका लागि सर्वथा अनुकूल छ । यस कालका स्वामी 'शिव' हुन्, कार्य प्रारम्भ गर्नुअगाडि धनियाँको सेवन अनुकूल हुन्छ ।

## पौष महिनाको अमृत काल

१ देखि ५ मिनेटसम्म : द्युत कार्य, व्यापार प्रारम्भ गर्नु, कुनै पनि घर वा पसलको मुहूर्त आदिका लागि यो समय शुभ छ । यस समयका देवता 'विष्णु' हुन्, सख्खर खानु शुभ छ ।

६ देखि १० मिनेटसम्म : यात्राका लागि यो समय शुभ छ । यस समयका देवता 'गणपति' हुन्, चाकुको भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

११ देखि १५ मिनेटसम्म : यात्रा स्थायित्वसम्बन्धी कार्य, व्यापार प्रारम्भ, मुहूर्त आदिका लागि यो समयको चुनाव शुभ छ । यस समयकी देवी 'लक्ष्मी' हुन्, दूध-प्रसाद भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

१६ देखि २० मिनेटसम्म : द्युत कार्य, व्यापार, यात्रा आदिका लागि यो समय उपयुक्त छ । यस समयका देव

# आश्विन, कार्तिक, मंसिर र पौष महिनामा पर्ने विभिन्न कालहरू

| आइतबार | | सोमबार | | मंगलबार | | बुधबार | | बिहीबार | | शुक्रबार | | शनिबार | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* |
| ६:००-७:३६बिहान | शून्य | ६:००-९:१२बिहान | अमृत | ६:००-७:३६बिहान | अमृत | ६:००-६:४८बिहान | शून्य | ६:००-६:४८बिहान | अमृत | ६:००-९:१२बिहान | वक्र | ६:००-७:३६बिहान | शून्य |
| ७:३६-१०:०० | अमृत | ९:१२-१०:४८ | महेन्द्र | ७:३६-१०:०० | वक्र | ६:४८-८:२४ | महेन्द्र | ६:४८-८:२४ | शून्य | ९:१२-१०:४८<br>*१०:३०-१२:००* | अमृत<br>*राहु* | ७:३६-९:१२<br>*९:००-१०:३०* | वक्र<br>*राहु* |
| १०:००-१२:२४ | वक्र | १०:४८-१:१२ | शून्य | १०:००-१०:४८ | अमृत | ८:२४-११:३६ | अमृत | ८:२४-१०:४८ | वक्र | १०:४८-११:३६<br>*१०:३०-१२:००* | शून्य<br>*राहु* | ९:१२-१०:४८<br>*९:००-१०:३०* | शून्य<br>*राहु* |
| १२:२४-२:४८ | अमृत | १:१२-३:३६ | अमृत | १०:४८-१२:२४ | शून्य | ११:३६-२:००<br>*१२:००-१:३०* | वक्र<br>*राहु* | १०:४८-१२:२४ | अमृत | ११:३६-१२:२४<br>*१०:३०-१२:००* | अमृत<br>*राहु* | १०:४८-२:०० | अमृत |
| २:४८-४:२४ | वक्र | ३:३६-६:०० | महेन्द्र | १२:२४-२:४८ | महेन्द्र | २:००-५:१२ | शून्य | १२:२४-१:१२ | शून्य | १२:२४-२:०० | वक्र | २:००-२:४८ | शून्य |
| ४:२४-५:१२<br>*४:३०-६:००* | अमृत<br>*राहु* | ६:००-८:२४रात्रि | वक्र | २:४८-५:१२<br>*३:००-४:३०* | शून्य<br>*राहु* | ५:१२-६:०० | वक्र | १:१२-२:४८<br>*१:३०-३:००* | वक्र<br>*राहु* | २:००-४:२४ | अमृत | २:४८-४:२४ | वक्र |
| ५:१२-६:००<br>*४:३०-६:००* | शून्य<br>*राहु* | ८:२४-११:३६ | अमृत | ५:१२-६:०० | वक्र | ६:००-६:४८रात्रि | शून्य | २:४८-५:१२<br>*१:३०-३:००* | अमृत<br>*राहु* | ४:२४-६:०० | महेन्द्र | ४:२४-५:१२ | शून्य |
| ६:००-७:३६ रात्रि | शून्य | ११:३६-२:०० | वक्र | ६:००-८:२४रात्रि | वक्र | ६:४८-१०:४८ | अमृत | ५:१२-६:०० | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ५:१२-६:०० | महेन्द्र |
| ७:३६-९:१२ | अमृत | २:००-३:३६ | अमृत | ८:२४-११:३६ | अमृत | १०:४८-२:०० | वक्र | ६:००-७:३६रात्रि | शून्य | ७:३६-८:२४ | शून्य | ६:००-६:४८रात्रि | शून्य |
| ९:१२-११:३६ | वक्र | ३:३६-४:२४ | शून्य | ११:३६-२:०० | वक्र | २:००-४:२४ | अमृत | ७:३६-९:१२ | वक्र | ८:२४-१०:४८ | अमृत | ६:४८-८:२४ | वक्र |
| ११:३६-२:०० | अमृत | ४:२४-६:०० | वक्र | २:००-३:३६ | अमृत | ४:२४-५:१२ | शून्य | ९:१२-१०:०० | शून्य | १०:४८-१:१२ | शून्य | ८:२४-१०:४८ | अमृत |
| २:००-३:३६ | शून्य | | | ३:३६-४:२४ | शून्य | ५:१२-६:०० | वक्र | १०:००-१२:२४ | अमृत | १:१२-२:०० | महेन्द्र | १०:४८-१२:२४ | वक्र |
| ३:३६-६:०० | वक्र | | | ४:२४-६:०० | वक्र | | | १२:२४-२:४८ | वक्र | २:००-२:४८ | शून्य | १२:२४-२:४८ | अमृत |
| | | | | | | | | २:४८-३:३६ | शून्य | २:४८-६:०० | वक्र | २:४८-४:२४ | वक्र |
| | | | | | | | | ३:३६-६:०० | वक्र | | | ४:२४-६:०० | अमृत |
| परमपूज्य सद्गुरुदेव डा.नारायणदत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज)द्वारा रचित *'ज्योतिष और काल निर्णय'* ग्रन्थमा आधारित । | | | | | | | | | | | | | |

**महेन्द्रकाल– सर्वश्रेष्ठ, अमृतकाल– श्रेष्ठ, वक्रकाल– सामान्य, शून्यकाल– निकृष्ट । शुभकालमा राहुकाल पनि मिसिएको छ भने त्यो समय पनि आफैँ अशुभ हुन्छ ।**

सूक्ष्म काल विवेचना गर्नुपर्दा– सर्वप्रथम कुन बार हो र कति बजेको विवेचना गर्नु छ, त्यसअनुसार कुन काल परेको छ (महेन्द्रकाल, अमृतकाल, वक्रकाल वा शून्यकाल) त्यो तालिका हेरेर पत्ता लगाउनु पर्दछ । उदाहरणका लागि २०६६ पौष १३ गते सोमबार बिहान ७:१३ बजेको सूक्ष्म विवेचना गरौँ । सोमबार प्रातः ६:०० देखि ९:१२ बजेसम्म अमृतकालको समय छ । हाम्रो समय अमृतकालमा परेको छ । अब हाम्रो समय ७:१३ बाट हाम्रो काल शुरु भएको समय ६:०० घटाऔँ । बाँकी रह्यो १:१३ अर्थात् १ घण्टा १३ मिनेट । अब घण्टा जति भए पनि त्यसलाई छोडिदिएर मिनेटमा मात्र विचार गर्नुहोस्- १३ मिनेट । त्यसपछि पौष महिनाको अमृतकालमा १३ मिनेट कहाँ पर्दछ हेर्नुहोस् । त्यहाँ लेखिएको छ– **११ देखि १५ मिनेटसम्म : व्यापार, सफलता, शिक्षा, खेल, प्रणय–प्रसंग, विवाह, यात्रा आदिका लागि यस समयको चुनाव गर्नुपर्दछ । यस समयका देवता 'गौतम' हुन्, कार्य प्रारम्भ गर्नु अघि पान खानु शुभ मानिन्छ ।** अब यहाँ लेखिएअनुसार गर्न सक्नुहुनेछ ।

'शनि' हुन्, तिलको भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

२१ देखि २५ मिनेटसम्म : परीक्षा, चुनाव, इन्टरभ्यू तथा यात्रादिका लागि यो सयम शुभ छ । यस समयका अधिष्ठाता 'चन्द्र' हुन्, दही भक्षण शुभ मानिन्छ ।

२६ देखि ३० मिनेटसम्म : यात्रा, महत्त्वपूर्ण र उन्नति कार्यहरूका लागि यो समयको चुनाव छ । यस समयका देवता 'रुद्र' हुन्, चाकुको भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

३१ देखि ३५ मिनेटसम्म : यात्रा, व्यापार, उन्नति कार्य एवं समस्त शुभ कार्यका लागि यस समयको चुनाव गर्नु शुभ हो । यस समयका प्रधान देव 'विष्णु' हुन्, मीठो पकवान भक्षण शुभ मानिन्छ ।

३६ देखि ४० मिनेटसम्म : स्थायी कार्य एवं व्यापार, उन्नति तथा यात्रादिका लागि यो शुभ समय हो । यसका अधिष्ठात्री देवी 'गौरी' हुन्, दूबो खानु शुभ मानिन्छ ।

४१ देखि ४५ मिनेटसम्म : विवाह, कुरा छिन्ने आदिका लागि प्रस्थान, इन्टरभ्यू, मुद्दा-मामिला आदिका लागि यो समय शुभ मानिन्छ । यस समयका अधिष्ठाता देव 'हनुमान्' हुन्, चाकुको भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

४६ देखि ५० मिनेटसम्म : द्युत कार्य, व्यापार, व्यवसायका लागि यात्रा, यज्ञ, पूजन, अनुष्ठानका आदिका लागि यो समय शुभ छ । यस समयका देवता 'शिव' हुन्, चामल खाएर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

५१ देखि ५५ मिनेटसम्म : यात्रादिका लागि सर्वाधिक उपयुक्त समय छ । यस कालका देवी 'सरस्वती' हुन्, मुगीको दाना चपाएर यात्रा प्रारम्भ गर्नु शुभ मानिन्छ ।

५६ देखि ६० मिनेटसम्म : कुनै पनि प्रकारको कार्यको लागि यो शुभ समय हो । यसका देवता 'नृसिंह' हुन्, लड्डूको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

## पौष महिनाको वक्र काल

१ देखि ५ मिनेटसम्म : व्यापार आदिका लागि यो समय अपेक्षाकृत ठीक छ । यस समयका प्रधान देव 'गरुड' हुन्, हरिद्रा भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ रहन्छ ।

६ देखि १० मिनेटसम्म : द्युत कार्यका लागि उपयुक्त समय हो । यस समयका प्रधान देव 'वरुण' हुन्, दही खाएर यात्रा गर्नुपर्दछ ।

११ देखि १५ मिनेटसम्म : जासूसी, भेद ज्ञान गर्ने, सामुन्नेका व्यक्तिलाई प्रभावित गर्ने आदिका लागि यो समय ठीक छ । यस समयका प्रधान देव 'वात' हुन्, चामल खाएर यात्रा गर्नुपर्दछ ।

१६ देखि २० मिनेटसम्म : व्यापार, व्यवसायका लागि सामान्य अनुकूल छ । यस समयका प्रधान देव 'चन्द्रमा' हुन्, दही भक्षण शुभ मानिन्छ ।

२१ देखि २५ मिनेटसम्म : जुवा, दौड, चलचित्र, व्यापार आदिका लागि यो उपयुक्त समय हो । यसका प्रधान देव 'शुक्राचार्य' हुन्, पकवान खाएर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

२६ देखि ३० मिनेटसम्म : यात्रा आदिका लागि यो समय विशेष अनुकूल छ । यस समयका प्रधान देव 'गणपति' हुन्, चाकुको भक्षण शुभ मानिन्छ ।

३१ देखि ३५ मिनेटसम्म : यात्राका लागि आरम्भमा केही बाधाकारक भए पनि अन्तमा ठीक छ । यसका प्रधान देव 'अग्नि' हुन्, तोरी चबाएर कार्य प्रारम्भ गर्नु उत्तम मानिन्छ ।

३६ देखि ४० मिनेटसम्म : प्रेम-प्रदर्शन, प्रणय आदिका लागि यो समयको चुनाव ठीक रहन्छ । यस समयका प्रधान देव 'कामदेव' हुन्, मह भक्षण गरेर हिँड्नु शुभ छ ।

४१ देखि ४५ मिनेटसम्म : मित्रता बढाउने, अधकिार प्राप्त गर्ने, स्थानान्तरण आदिका लागि यो समय उपयुक्त छ । यस समयका प्रधान देव 'सूर्य' हुन्, जीराको भक्षण शुभ मानिन्छ ।

४६ देखि ५० मिनेटसम्म : यात्रादिका लागि यो समय अनुकूल छ । 'मरुत्' यस समयका प्रधान देव हुन्, चाकुको भक्षण गरेर यात्रारम्भ शुभ मानिन्छ ।

५१ देखि ५५ मिनेटसम्म : व्यापारिक कार्यहरूका लागि यो समय शुभ छ । यस समयका प्रधान देव 'गुरु' हुन्, बेसनबाट बनाइएका मिठाइको प्रयोग शुभ मानिन्छ ।

५६ देखि ६० मिनेटसम्म : प्रेम, वाद्य, द्युत आदिका लागि शुभ समय हो । यस समयका प्रधान देव 'पुष्पधन्वा' हुन्, महको सेवन शुभ मानिन्छ ।

## पौष महिनाको शून्य काल

१ देखि ५ मिनेटसम्म : कार्यको प्रारम्भमा दिक्दारी तर पछि स्थितिमा सुधार । प्रधान देव 'अग्नि'को स्मरण र तिलको भक्षण शुभ ।

६ देखि १० मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं झञ्झटपूर्ण, तर पनि गणपतिको स्मरण र चाकु खाएर कार्य प्रारम्भ गर्दा शुभ ।

११ देखि १५ मिनेटसम्म : बाधाकारक समय, तर मुद्दा-मामिलाका लागि शुभ । यस समयका देवता 'हनुमान्' हुन्, चाकु, घिउ खाएर यात्रा गर्दा अनुकूल ।

१६ देखि २० मिनेटसम्म : यात्रादिका लागि विपरीत समय, शुभ कार्यहरूमा वर्जित, प्रधान देवता 'चित्रगुप्त'को स्मरण र फूलको भक्षण गरेर कार्यको प्रारम्भ गर्दा केही अनुकूलता ।

२१ देखि २५ मिनेटसम्म : प्रत्येक कार्य वा यात्रादिका लागि प्रारम्भमा बाधाकारक तर पछि शुभ । यसकी प्रधान देवी 'लक्ष्मी' हुन्, चामल भक्षण शुभ ।

२६ देखि ३० मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं बाधाकारक, तर 'हिडिम्बा'को स्मरण र घृत भक्षण शुभ छ ।

३१ देखि ३५ मिनेटसम्म : प्रत्येक कार्य व्यवधानपूर्ण छ, तर पनि 'गौरी'को स्मरण र दहीको भक्षणपछि कार्य प्रारम्भ गर्दा केही अनुकूलता ।

३६ देखि ४० मिनेटसम्म : द्युत कार्यका लागि शुभ । यस समयका देवता 'काल' हुन्, मह भक्षण गरेर हिँड्नु अनुकूल छ ।

४१ देखि ४५ मिनेटसम्म : प्रणय-प्रसंग, मद्यपान, जुवा, घोडादौड आदिका लागि अनुकूल । यस समयका प्रधान देवता 'शुक्राचार्य' हुन्, फलको सेवन गरेर हिँड्नुपर्दछ ।

४६ देखि ५० मिनेटसम्म : द्युत, मद्य, घोडादौड, सौन्दर्यप्रसाधन सामग्रीको विक्रय, व्यापार आदिका लागि अनुकूल । यसका प्रधान देवता 'विश्वकर्मा' हुन्, चाकु, घिउको भक्षण शुभ मानिन्छ ।

५१ देखि ५५ मिनेटसम्म : प्रत्येक कार्यका लागि सामान्य अनुकूल छ । यस समयका प्रधान देवता 'मकरध्वज' हुन्, तोरी चबाउनु शुभ ।

५६ देखि ६० मिनेटसम्म : शुभ, यात्रादिका लागि अनुकूल । यस समयका प्रधान देवता 'ब्रह्मा' हुन्, दहीको सेवन शुभ मानिन्छ ।

जय गुरुदेव !

# गुरु शरणमा पिशाच

२०६६ सालको श्रावण महिनाको २७ गते बिहानको समयमा म जप गरिरहेको थिएँ । अकस्मात् म गाउँबेँसी गर्ने एउटा बाटोमा पुगेछु । बाटोमा महिलाझैँ देखिने मानिसलाई देखेँ । उसले नजिकै आएर भनी– 'मलाई भूत, प्रेत, पिशाच, डंकिनी जे पनि भन्छन्, मैले यो बाटोमा हिँड्ने गरेको धेरै वर्ष बितिसकेको छ । यस क्रममा विभिन्न निहुँ र बहानामा मैले धेरै मानिसलाई खाइसकेकी छु, मुखमा राँको बालेर पनि यस बाटोमा हिँडेकी छु, कहिले त सिठ्ठी बजाउँदै पनि हिँडेकी छु । अब मलाई यी सबै दुष्कर्म गर्ने मन पनि छैन र गर्न पनि सक्तिन । म गुरुदेवको शरणमा जान चाहन्छु ।'

ऊ मेरो अगाडि गुरुदेवकहाँ लगिदेऊ भनेर लम्पसार परेर सुती । उसले हरियो रंगको कपडा लगाएकी थिई भने उसको अनुहार चिन्न नसकिने र शरीर मोटो, अग्लो थियो । त्यतिबेला मेरो शरीरमा भने करेन्ट लागेजस्तो भइरहेको थियो ।

जप नछोडीकन मैले उसलाई भनेँ– मैले गुरुदेवसँग तिमीलाई शरणमा लिनुहोस् भनेर हुन्छ त ? उहाँसँग शरणमा लिनुहोस् भनेर आफैले भन्नुपर्छ ।

उसले आफूले धेरै कुकर्म गरेकी हुनाले आफैले गुरुदेवलाई शरणागतिका लागि भन्न नसक्ने बताई । उसले गुरुदेवसमक्ष पहिले उसलाई लगिदिन धेरै आग्रह गरी । मैले अन्तमा गुरुदेवसँग एकपटक कुरा राखिदिन्छु भनेर अगाडि हेरेको त परमपूज्य गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज अगाडि नै बसिरहनुभएको थियो । मैले गुरुदेवको दर्शन गरेर उसको आग्रहलाई गुरुदेवसामु राखिदिएँ । त्यतिबेला ऊ गुरुदेवको अगाडि देखा पर्न नसकी मेरो पछाडि बसेकी थिई ।

मेरो भनाइ सकिएपछि गुरुदेवले 'खै' मात्र भन्नुभएको थियो । ऊ बिस्तारै गुरुदेवतिर बढी । गुरुदेवको नजिक पुगेपछि ऊ त एकछिनका लागि विलीन भई । पछि त गुरुदेवलाई कुर्सीमा बसिरहनुभएको देखेँ । ऊ गुरुदेवको पछाडिपट्टिको साइडमा उभिएर अति हर्षित मुद्रामा भनिरहेकी थिई– मैले धेरै समयदेखि यस ठाउँमा अति कष्ट सहँदै आइरहेकी छु, मैले धेरैलाई पनि विविध कष्ट दिएकी छु, तर आज उहाँबाट म हजूरसम्म आइपुगेकीले मैले मुक्ति पाएँ । उहाँलाई मैले आशीर्वाद दिनुपर्छ ।

उसले अझै भनी– अब यस बाटोमा हिँड्ने जो कोही पनि निर्धक्क भएर हिँडे हुन्छ, अब यो बाटो शान्त भयो । त्यतिबेला मेरो शरीर भने पूरै करेन्ट लागेजस्तो भइरहेको थियो, सम्पूर्ण शरीर बेस्सरी तातेको थियो, आँखाबाट आँसु बगिरहेको थियो । जय गुरुदेव ।

*–मुक्तिचन्द्र अधिकारी*
*गौरीगञ्ज, चितवन ।*

# हार्दिक श्रद्धाञ्जलि

जन्म
१९९२ पुस १०

स्वर्गारोहण
२०६६ असोज ६

**स्व. लेखत बहादुर निरौला**

हाम्री प्रात: स्मरणीय लेखत बहादुर निरौलाको मिति २०६६ असोज ६ गतेका दिन स्वर्गारोहण भएकोले उहाँको आत्माको चिर शान्तिको लागि परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको चरणकमलमा भावपूर्ण प्रार्थना गर्दछौँ ।

श्रीमती– चन्द्रकुमारी निरौला
दाइ– कुलबहादुर निरौला
भाइहरू– यश बहादुर, तीर्थ र सुशील निरौला
छोराबुहारी– महेन्द्र/पबिता निरौला
सूर्यब./रुद्रमाया निरौला
छोरीहरू– पार्वती, अमृता, मिश्रा

ज्वाइँहरू– चकेन्द्र, पदम बस्नेत
नातिनातिनी– सुषमा, एलुसा, एन्जु र एन्जल निरौला
*तथा*
*सम्पूर्ण निरौला परिवार*
एवं
सम्धी– टोपबहादुर बस्नेत

तिमी बीज हौ–यस कुरामा मलाई गर्व छ। म किसान हुँ, माटोको छोरो र पुष्ट, उन्नत बीजहरूलाई मैले प्रादुर्भाव गरेको छु, तयार गरेको छु। यी बीजहरू तयार छन् जमिनमा, माटोमा मिल्नका लागि र तयार छन् विशाल घना वृक्ष बन्नका लागि किनकि यी बीजहरू मेरा हातबाट तयार भएका छन्, मेरा हातबाट पुष्ट भएका छन्, मलाई यिनमाथि भरोसा छ। र कुनैहावाले यी बीजहरूलाई आफूसँगै उडाएर लगिरहेको छ, टाढा–टाढा धेरै टाढा...। मलाई विश्वास छ हावासँगै यी बीजहरू उडेका त छन् तर जुन खेतमा झर्नेछन्, व्यर्थ जाने छैनन्। त्यस खेतको माटोमा आफूलाई भिजाएर घना वृक्ष बन्नेछन् र आफ्नो छहारीमा हजारौँ हजार प्राणीहरूलाई विश्राम दिनेछन्। किनकि मबाट तयार भएका यी साधकरूपी बीज सही अर्थमा अमृत–कण हुन्।

*– परमपूज्य सद्‌गुरूदेव परमहंस स्वामी*
*श्री निखिलेश्वरानन्द महाराज*

# भावपूर्ण श्रद्धाञ्जलि

जन्म
२००१

स्वर्गारोहण
२०६६।०६।२९

**स्व. लीलामाया सुनाम**

मेरी आत्मीय श्रीमती लीलामाया सुनामको मिति २०६६ असोज २९ गते बिहीबारको दिन स्वर्गारोहण भएकोमा ४५ औँ दिनको पुण्य तिथिमा दिवंगत आत्माको चिर शान्तिका लागि परमपूज्य सद्‌गुरुदेवहरूको चरणकमलमा सभक्ति प्रार्थना गर्दछौँ । यस दु:खद घडीमा हामीलाई समवेदना प्रकट गर्नुहुने सम्पूर्ण महानुभावहरूमा हार्दिक कृतज्ञता प्रकट गर्दछौँ ।

**रामेछाप जिल्ला प्रिती बलखी वडा नं. ९**

पति– पसले सुनाम
छोरा– सीताराम सुनाम
बुहारी– रिता सुनाम
नातिनी– सुदिक्षा, एलिना, सजना, समीक्षा सुनाम
नाति– सन्देश सुनाम

ज्वाइँ– रमेश महत
छोरी– बिना महत
नातिनी– सम्झना महत
सिर्जना महत
नाति– प्रसन्न महत

ज्वाइँ– शंखर ज्याइल्याई
सुकमाया ज्याइल्याई
छोरी– कृष्णमाया ज्याइल्याई
नाति– प्रदीप ज्याइल्याई
प्रबिन ज्याइल्याई

ज्वाइँ– पुष्कल परियार
छोरी– अम्बिका परियार
नातिनी– प्रतीक्षा परियार
*एवं*
*समस्त सुनाम परिवार*
*बन्धु*

# कृत्रिमता हटाऔं सिँहासनबाट

कृत्रिम जीवन शैली, कृत्रिम खाना, कृत्रिम शृंगार ! लगभग हिसाब गर्ने हो जीवनको ८० देखि ९० प्रतिशत पक्ष कृत्रिमतामा परिणत भइसकेको देखिन्छ । चाहे मानिसको बोल्ने शैलीमा होस् अथवा व्यवहार गर्ने वा हेर्ने शैली, सबैमा बनावटीपन र कृत्रिमता झल्केको आभास पाइन्छ । जुनसुकै तरीका वा कृत्रिमता अपनाएर होस् मानिस आफूलाई नजानिँदो पारामा उत्कृष्ट, सर्वोत्कृष्ट, सर्वसुन्दर र सर्वज्ञाता घोषित गर्न चाहन्छ । यहाँ भने कृत्रिमतासँग जोडेर सौन्दर्य र सिँहासनको प्रसंग कोट्याउन खोजिएको हो । कृत्रिमताको प्रयोग हुने मानव जीवनका प्रमुख पक्षहरूमध्ये सौन्दर्य नै प्रथम श्रेणीमा पर्न सक्छ । सबैलाई सुन्दर बन्नुपर्ने– ब्युटीपार्लर गएर होस् या जेसुकै केमिकल दलेर होस् । कृत्रिम उपायलाई अपनाएर केही क्षण आश्चर्यलाग्दो किसिमले आफूलाई सिङ्गारेर सबै दङ्ग परिरहेको प्रतीत हुन्छ । यी विभिन्न रसायनहरू जुन हाम्रो मुखको कमलो छालाको लागि निकै घातक हुन्छन्, मुखमा दलेर हामीले केही क्षणका लागि आफ्नो अनुहार जगमगाउँदो पारे पनि कालान्तरमा यसले निकै दुःख दिन्छ भन्ने तथ्य सबैलाई थाहा नहुन सक्छ ।

त्यसैले केही बुझ्न खोज्ने, जान्न खोज्ने र प्रकृतिलाई अँगालेर प्रकृतिमा नै रम्न खोज्ने तपाईं हामीले भने किन त्यस्तो हानिकारक द्रव्यहरूको सहारा लिने ? बरू सौन्दर्य वृद्धि, सौन्दर्यको स्थायित्वका लागि हाम्रा ऋषिमुनिहरूले हामीलाई उपहारस्वरूप छोडेर जानुभएका प्राचीन उपायहरूलाई समयमा नै किन नअपनाउने ?

योग, आयुर्वेद, ध्यान, हवन आदिजस्ता विधाहरू अपनाउन जानेमा हाम्रो अमूल्य स्वास्थ्य हानिकारक रसायनहरूबाट बच्ने मात्र नभई यसबाट हाम्रो पैसा, समय पनि बच्दछ । यिनै विधाहरूमध्ये सरल, घरमा नै अभ्यास गर्न सकिने सौन्दर्य र तेजवर्धक सिँहासनको बारेमा हामी यस अंकमा पाठकवृन्दलाई जानकारी दिन गइरहेका छौँ जुन आसन विधिलाई अपनाएर यहाँहरूले आफ्नो अनुहारको चाउरीपना, निस्तेजपना मेटाउनुहुनेछ, केमिकलहरू दल्ने बानी हटाउनुहुनेछ, अनुहारमा ताजापन, कान्ति ल्याएर यसलाई सुकोमल तथा आकर्षक बनाउनुहुनेछ भन्ने हामीले आशा लिएका छौं ।

वास्तवमा सिँहासनको अर्थ हो सिँहको जस्तै मुद्रा बनाउनु । पशुविशेष अर्थात् आसन गर्दा पशुको आकृतिसँग

मेल खाने आसनहरूमध्ये यो पनि एक हो । ज्ञात रहोस्, सिँहासन मात्र एउटा यस्तो आसन विधि हो जसले हाम्रो अनुहारको सम्पूर्ण क्षेत्रमा राम्रो प्रभाव पार्दछ । यसले आँखा, जिब्रो, ओठ, गाला, घाँटीको राम्रो व्यायाम पुऱ्याउँदछ भने अनुहारदेखि तलतिरका सबै क्षेत्रमा यसबाट निकै राम्रो प्रभाव पर्दछ । यो अत्यन्त लाभदायक भएको हुनाले नै होला पाश्चात्य मुलुकमा यस आसनले व्यापकता पाएको छ । एउटै आसनबाट हाम्रो सौन्दर्यलाई स्थायित्व दिन यो आसन रामवाण हो किनभने यसले हाम्रो अनुहारलाई निकै सुन्दर बनाउँछ र अनुहार नै हाम्रो सुन्दरताको केन्द्र हो । त्यसैले आउनुहोस् यस आसनलाई गर्ने विधिबारे केही चर्चा गरौं ।

**विधि–**

- सबभन्दा पहिले बज्रासनमा बस्ने । यसको लागि खुट्टालाई मोडेर पैतलामाथि बसौं । घुँडालाई एकदेखि अर्कोको करिब एक फिट जतिको दूरीमा राखौं ।
- दुवै हातलाई दायाँबायाँ घुँडाको बीचमा राखौं र हातको पञ्जालाई फैलाऔं । हातहरूलाई नितम्बतर्फ मोडौं ।
- छातीलाई केही अगाडि तन्काऔं । कम्मरलाई सीधा राखेर माथितिर तानिराखौं ।
- यस अवस्थामा आइसकेपछि लामो श्वास तानौं र पुनः श्वास छोडेर सिँहनाद अर्थात् सिँहको जस्तो आवाज निकालौं ।
- याद रहोस्, हामीले बेस्कन श्वास छोड्दा सिंहको गर्जनाजस्तो निस्कन्छ । जति ठूलो सिँहनाद गर्न सक्छौं र जति बढी मुखाकृतिलाई तन्काउन सक्छौं त्यति नै यो आसन सफल भएको ठान्नुपर्दछ र श्वास तान्दा हामीले नाकबाट तान्नुपर्दछ ।

- शुरु शुरुमा मुखाकृतिलाई तन्काउँदा धैर्यपूर्वक तन्काउने र फैलाउने चेष्टा गर्नुपर्दछ । योगलाई अपनाउँदा बलजफ्ती गर्नु वर्जित छ। यो मुद्रामा बसेर निम्नलिखित क्रियाहरू गरौँ–

क) आफ्ना हातका औँलालाई अधिकभन्दा अधिक जति फैलाउन सक्नुहुन्छ फैलाउनुहोस् ।

ख) आफ्नो मुखलाई जति बढी सक्नुहुन्छ खोल्नुहोस् अर्थात् आँऽऽ गर्नुहोस् ।

ग) अब आफ्नो जिब्रोलाई सकेसम्म बाहिर निकाल्नुहोस्, यहाँसम्म कि जिब्रोको टुप्पोले आफ्नो चिउँडो छुन सकियोस् । तर शुरु शुरुमा जति सकिन्छ त्यति मात्र निकाल्ने प्रयास गर्नुहोस् ।

घ) आफ्नो आँखालाई पूरै खोल्नुहोस् र यस स्थितिमा १०-१२ सेकेण्डसम्म बस्नुहोस्। फेरि बिस्तारै जिब्रोलाई मुखभित्र लैजानुहोस् र मुख बन्द गरेर केही क्षणसम्म शान्त भएर बस्नुहोस् र मुख फुकाएको आदि कारणले अनुहारमा आएको तनावलाई कम हुन दिनुहोस् । यसपछि फेरि मुख फैलाउने र जिब्रो निकाल्ने क्रियालाई दोहोऱ्याउनुहोस् ।

यो सिँहासन कुनै पनि समयमा गर्न सकिन्छ। अभ्यासको लागि प्रारम्भमा केवल दश सेकेण्ड आफ्नो जिब्रो बाहिर राख्नुहोस् र फेरि प्रति हप्ता पाँच सेकेण्ड बढाउँदै जानुहोस्। यस सिँहासनको क्रियालाई ३-४ पटकसम्म दोहोऱ्याउनु पर्याप्त हुन्छ ।

यसरी नै पद्मासनमा बसेर पनि सिँहासनको अभ्यास गर्न सकिन्छ । तर गर्ने विधि भने केही फरक हुन्छ ।

**लाभ–**

- स्वास्थ्य र सौन्दर्यको लागि इच्छुक महिलाहरूले सिँहासनबाट आफ्नो अनुहारको सौन्दर्यको रक्षा गर्न सक्छन् ।
- खाँदा र कुराकानी गर्दा वस्तुत: जिब्रो र घाँटीको पर्याप्त व्यायाम हुँदैन । सिँहासन चेष्टाहरूद्वारा नै घाँटी, जिब्रो र अनुहारको व्यायाम हुन पाउँछ र निश्चितरूपबाट यी अङ्गहरू सुध्रिन्छन् ।
- बढ्दै गरेको आयुमा अनुहारमा पर्ने चाउरीको अतिरिक्त सिँहासनबाट घाँटीका पेशीहरू पनि खुकुलो हुँदैनन् । बढेको उमेरमा पनि अनुहारको कसावट र चमक-दमक बनाइराख्नको लागि यो आसन बेजोड छ ।
- यस आसनको विशेष लाभ यो हो कि मुख र आँखाको आसपासमा रहेको चाउरीपना हटेर जान्छ । जुन मान्छेको अनुहारमा चाउरी छैन उनीहरूलाई पछि हुन सक्ने चाउरीपनाबाट रक्षा हुन्छ। तर यसबाट निधारको चाउरीमा प्रभाव पर्दैन ।
- यसको अतिरिक्त मुखका आन्तरिक भागहरूको व्यायाम पनि सिँहासनद्वारा नै सम्भव हुन्छ। जिब्रोको व्यायामबाट स्वर यन्त्र पनि कसिलो हुन्छ र आवाज सफा तथा सुरिलो हुन जान्छ । यो आसन गर्दा मुखभित्रको ऱ्यालग्रन्थिमा पनि प्रभाव पर्छ र त्यसबाट पर्याप्त मात्रामा ऱ्याल स्राव भएर पाचन सुध्रिन्छ ।
- सिँहासनको अभ्यास जब सर्वाङ्गासन वा शीर्षासन गरेपश्चात् गरिन्छ भने अधिक प्रभावकारी सिद्ध हुन जान्छ किनकि यी दुवै आसनहरूद्वारा अनुहार र घाँटीमा रगतको गति धेरै भएको हुन्छ। सिँहासनबाट अनुहारमा प्रभाव परेको कुरा यस आसन गर्ने व्यक्तिलाई चाँडै नै महसुस हुन थाल्छ ।
- मोडिएका खुट्टामा पनि सिँहासनबाट दबाव पर्न जान्छ र खुट्टाहरूको रक्तप्रवाह द्रुत र शुद्ध हुन्छ जसले खुट्टाहरू सशक्त बन्दछन् । जय गुरुदेव !

## २०६६ पौष महिनामा पर्ने चाडपर्व

| मिति | चाडपर्व |
|---|---|
| पौष १ गते | **तान्त्रोक्त महालक्ष्मी हवन, तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| पौष २ गते | **तान्त्रोक्त बगलामुखी हवन, तान्त्रोक्त महर्षि वेदव्यास हवन** |
| पौष ६ गते | **दिव्य गुरु महोत्सव, श्री शिव गोरक्ष हवन** |
| पौष ७ गते | **तान्त्रोक्त वटुक भैरव हवन, तान्त्रोक्त गणपति हवन** |
| पौष ९ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| पौष १० गते | क्रिसमस दिवस |
| पौष १३ गते | पुत्रदा एकादशीव्रत |
| पौष १४ गते | प्रदोषव्रत |
| पौष १५ गते | तमुलोसार |
| पौष १६ गते | चन्द्र ग्रहण, श्री स्वस्थानीव्रत तथा माघ स्नान शुभारम्भ |
| पौष २३ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| पौष २७ गते | षट्तिला एकादशीव्रत |
| पौष २८ गते | प्रदोषव्रत |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

# अग्रय संग्रह कुन चीज केमा श्रेष्ठ ?

*गोरक्ष निखिल वाणीको गत अंकमा आयुर्वेदको प्रमुख ग्रन्थहरूमध्ये एक अष्टाङ्ग संग्रहमा उल्लेख गरिएको अग्रय संग्रह अर्थात् कुन प्रयोजनको लागि कुन चीज श्रेष्ठ हुन्छ भन्ने विवरणसम्बन्धी चर्चा गरेका थियौं । आत्रेय आदि महर्षिहरूले वर्णन गर्नुभएको उक्त संग्रह हाम्रो व्यावहारिक जीवनमा अत्यन्त लाभदायक हुनसक्ने भएकोले सोको बाँकी अंश यहाँ प्रस्तुत गरिएको छ ।*

५२. वर्जनीय व्यक्तिहरूमा नास्तिक व्यक्ति प्रमुख वा उत्तम हुन्छ ।
५३. प्राण एवं संज्ञादायकमा वायु प्रमुख वा उत्तम हुन्छ ।
५४. अनुष्ठान गर्न योग्यमा सत्य वचन उत्तम हुन्छ ।
५५. सुखदायकमा अनासक्ति अर्थात् सर्वसंन्यास श्रेष्ठ हुन्छ ।
५६. अमृतहरूमा (जीवन-रक्षकमा) आयुर्वेद प्रमुख वा उत्तम हुन्छ ।
५७. मृत्यु वा बलनाशक कारणहरूमा सच्चा चिकित्सकसँग द्वेष राख्नु अर्थात् चिकित्सकको सल्लाह कत्ति पनि नमान्नु उत्तम हुन्छ ।
५८. शास्त्रको ज्ञान सम्पूर्णरूपमा बुझाउनमा वा यथार्थ ज्ञान गराउनमा गुरु प्रमुख वा उत्तम हुन्छ ।
५९. भय गराउने कुराहरूमा असमर्थता उत्तम हुन्छ ।
६०. शंकारहित गराउनमा दृष्टकर्मता (प्रत्यक्ष कर्माभ्यास) उत्तम हुन्छ ।
६१. प्रमाणित गर्ने आधारहरूमा शास्त्रसहित तर्क प्रमुख वा उत्तम हुन्छ ।
६२. बुद्धि बढाउनमा तद्विद्यसंभाषा (सम्बन्धित विज्ञहरूको बीचमा विचारहरूको आदान-प्रदान) प्रमुख वा उत्तम हुन्छ ।
६३. क्लेश गराउनेमा लोभ प्रमुख वा उत्तम हुन्छ ।
६४. उपकार गर्नेमा आत्मवान् अर्थात् आत्मालाई चिन्ने हुनु उत्तम हुन्छ ।
६५. चिकित्सकका गुणहरूमा सफलता प्रमुख हुन्छ ।
६६. चिकित्साका अंगहरूमा वैद्य वा चिकित्सक प्रमुख हुन्छ ।
६७. अरिष्ट अर्थात् मृत्युसूचक लक्षणहरूमा चिकित्सकको आदेश पालन नगर्नु प्रमुख हुन्छ ।
६८. रोगीका गुणहरूमा चिकित्सकको निर्देशन पालना गर्नु प्रमुख हुन्छ ।
६९. अहितकर भूमिहरूमा अनूप (पानी भएको) भूमि प्रमुख हुन्छ ।
७०. आरोग्यकर भूमिमा मरुभूमि उत्तम हुन्छ ।
७१. औषधिहरूमा सोम उत्तम हुन्छ ।
७२. औषध भूमिमा हिमालय उत्तम हुन्छ ।
७३. अनुषंगि रोगमा अर्थात् एकपछि अर्को रोग वा उपद्रव हुनेमा प्रमेह (Diabetes) उत्तम हुन्छ ।
७४. रोग समूहमा राजयक्ष्मा (TB) प्रमुख हुन्छ ।
७५. दीर्घ रोगहरूमा कुष्ठ (Leprosy and other skin diseases) उत्तम हुन्छ ।
७६. शीघ्रकारी रोगहरूमा ज्वर प्रमुख हुन्छ ।
७७. चिकित्साबाट सफलता नमिल्न सक्ने रोगहरूमा आमविष प्रमुख वा उत्तम हुन्छ ।
७८. गर्भधारण गर्न आवश्यक तत्त्वमा प्रसन्न मन हुनु प्रमुख वा उत्तम हुन्छ ।
७९. तीक्ष्ण औषधिहरू, मैथुन तथा बढी व्यायाम त्याग गर्नुपर्ने मानिसहरूमा गर्भिणी प्रमुख हुन्छ ।
८०. चिकित्सा आदिबाट यापन गर्नुपर्नेमा वृद्ध प्रमुख हुन्छ ।
८१. मृदु चिकित्सा गर्नुपर्नेमा बालक प्रमुख हुन्छ ।
८२. निकाल्नुपर्ने शल्यहरूमा मूढ गर्भ वा मृतगर्भ प्रमुख हुन्छ ।
८३. बाहिर निकाल्नु पर्नेमा अजीर्ण अर्थात् नपचेको आम वा खाना प्रमुख हुन्छ ।
८४. आम, स्तम्भ, शीत, शूल तथा उद्वेष्टन शान्त गराउनेमा अग्नि प्रमुख हुन्छ ।
८५. दुर्बलता, अरुचि तथा कुनै पनि दोष प्रकोप गराउनेमा एक मात्र रसको सेवन अर्थात् एकै प्रकारको खानाको सेवन गर्ने अभ्यास प्रमुख वा उत्तम हुन्छ ।
८६. बलदायकमा सबै रसहरू सेवन गर्ने अभ्यास उत्तम हुन्छ ।
८७. तन्द्रा गराउनेमा सुत्नु वा निद्रा उत्तम हुन्छ ।
८८. शरीर सुकाउनेमा शोक उत्तम हुन्छ ।
८९. शरीर पुष्टि गर्नेमा निश्चिन्तता (निर्वृत्ति) प्रमुख वा उत्तम हुन्छ ।
९०. बलदायकमा आश्वासन प्रमुख हुन्छ ।
९१. शरीर प्रसन्न गराउनेमा हर्ष प्रमुख वा उत्तम हुन्छ ।

९२. प्राणनाशकमा शक्तिभन्दा बढी काम गर्नु उत्तम हुन्छ ।
९३. रोग बढाउनेमा विषाद प्रमुख हुन्छ ।
९४. आयुष्यमा ब्रह्मचर्य प्रमुख हुन्छ ।
९५. अनायुष्य अर्थात् आयु नाश गर्नेमा परस्त्रीगमन श्रेष्ठ हुन्छ ।
९६. अलक्ष्मी अर्थात् दरिद्रता गराउनेमा रजस्वला भएकी स्त्रीसँग सहवास गर्नु उत्तम हुन्छ ।
९७. रोगको कारणहरूमा मिथ्या योग अर्थात् काल, इन्द्रिय-विषय र कर्मको प्रतिकूलता प्रमुख वा उत्तम हुन्छ ।
९८. अन्नमा अश्रद्धा वा अरुची गराउनेमा बधस्थल देख्नु वा मरेको वा मारेको देख्नु उत्तम हुन्छ ।
९९. अन्नमा श्रद्धा गराउनेमा पाउमा उद्वर्तन गर्नु वा टहलिनु उत्तम हुन्छ, सुन्दर देखिने अन्न उत्तम हुन्छ ।
१००. नपुंकसता गराउनेमा शुक्रको वेग रोक्नु प्रमुख हुन्छ ।
१०१. शोषको कारणमा धेरै मैथुन गर्नु प्रमुख हुन्छ ।
१०२. बुद्धि, धारणा शक्ति एवं स्मृति नाश गर्नेहरूमा अनुचितरूपमा सेवन गरिएको मद्य श्रेष्ठ हुन्छ ।
१०३. कृशता गर्नेहरूमा ज्यादै कम अन्न खानु वा क्षुद्र अन्न सेवन गर्नु उत्तम हुन्छ ।
१०४. आयु घटाउनेहरूमा अनशन उत्तम हुन्छ ।
१०५. आरोग्यकारकहरूमा ठीक समयमा भोजन गर्नु उत्तम हुन्छ ।
१०६. अग्नि विषम गराउनेमा विषम आहार सेवन गर्नु उत्तम हुन्छ ।
१०७. रोग उत्पन्न गर्ने कारणहरूमा मल, मूत्रादिको वेग धारण गर्नु नै प्रमुख हुन्छ ।
१०८. आहारबाट प्राप्त गुणहरूमा तृप्ति प्रमुख हुन्छ ।
१०९. पाण्डु रोग (Anaemia) नाश गर्नमा लौह भस्म श्रेष्ठ हुन्छ ।
११०. कुष्ठ नाशकमा खयर श्रेष्ठ हुन्छ ।
१११. दाँतहरू बलियो गराउन र रुचीकारकमा तेलको कुल्ला गर्ने अभ्यास उत्तम हुन्छ ।
११२. शीतनाशक लेपहरूमा रास्ना र अगुरुको लेप उत्तम हुन्छ ।
११३. दाहशामक लेपहरूमा चन्दन र उदुम्बरको लेप उत्तम हुन्छ ।

यहाँ उल्लेख गरिएका अग्रय संग्रहबाट मात्र हित र अहितको विनिश्चय गर्न पर्याप्त छैन । यसका लागि सम्बन्धित विज्ञहरूको परामर्श लिएर मात्र माथिका द्रव्यहरूलाई प्रयोग गर्न, व्यवहृत गर्न हामी अनुरोध गर्दछौं । जय गुरुदेव !

# म अनि मेरो विद्याश्रम

जन्मिएँ म यो धरतीमा
गुरुदेवको शिष्य बनी
बोलाउनुभयो विद्याश्रममा
राम्रो काम गर भनी

झूटो नबोल, साँचो बोल
भन्ने गोरख निखिल वाणी
सानालाई माया गर्ने
हाम्रो राम्रो बानी

विद्याश्रममा आएर
धेरै ज्ञान लियौँ
त्यही ज्ञान लिएर
महान् हामी बनौँ

दैवी पुष्प योग पुष्प
सबै हामीले पढ्ने
त्यो पुष्प पढेर
महान् हामी बन्ने

विद्याश्रमको आँगनीमा
पहिलो पाइला टेक्दा
खुसी भयो मेरो मन
गुरुलाई देख्दा

बोलाउनुभयो गुरुदेवले
हामीलाई विद्याश्रममा
उहाँको नाम फैलाऊ
भन्नुभयो सपनीमा

निर्माण गर्नुभयो सिद्धाश्रम
केही वर्ष पहिले
आशीर्वाद दिन बोलाउनुभयो
विद्याश्रममा अहिले ।
जय गुरुदेव ।

*–सचिता चौलागाईं*
*कक्षा ८*
*गो. नि. ज्योति दिव्य विद्याश्रम*

# सिद्धाश्रम शक्ति केन्द्र

# सम्पर्क कार्यालय पुरानो बानेश्वर

जब पुरानो बानेश्वरस्थित सिद्धाश्रम शक्ति केन्द्रको केन्द्रीय कार्यालय २०६४ सालको आषाढ महिनामा नवनिर्मित भवन बसुन्धरामा सर्‍यो, सबै कार्यकर्ताहरू एवं शुभचिन्तकहरूमा हर्ष छाएको थियो। तर यसबाट बानेश्वर र यस वरिपरिका साधक-साधिका र शुभेच्छुकहरूमा केही अभाव खट्किएको महसुस भइरहेको देखिन्थ्यो । आफ्ना प्यारा गुरुदेवहरूको आश्रम आफ्नो टोलबाट अन्यत्र सरेपछि आफ्नो टोल विरानो लाग्नु र केही गुमाएको जस्तो लाग्नु स्वाभाविक पनि हो ।

यस मनोदशालाई हटाउन कार्यकर्ताहरू दिनरात लागि पर्नुभयो । कार्यकर्ताहरूको धैर्य, लगन र परमपूज्य सद्गुरुदेवहरूको युग निर्माणमा लाग्ने अटल प्रणले साकार रूप लिन पुग्यो । पुरानो बानेश्वरको पीपलबोट नजीकको घरको दोस्रो तल्ला भाडामा लिइयो । सौभाग्यवश २०६४ कार्तिक १ गतेबाट उक्त स्थानबाट नित्य आरती गर्ने आदेश प्राप्त भयो । उक्त ठाउँमा प्रचार-प्रसार कक्ष स्थापित गर्दै आश्रमलाई व्यवस्थित गर्दै लाने काम भयो । यसै क्रममा बानेश्वरस्थित ई.पि.एस. स्कुलमा भजन-कीर्तन एवं प्रचार-प्रसार कार्यक्रमको पनि आयोजना गरियो। त्यसपछि आरती संचालन केन्द्रको रूपमा यसलाई विकसित गर्न कार्यकर्ताहरू कटिबद्ध भएर लाग्नुभयो ।

परमपूज्य सद्गुरुदेवहरूको कृपा एवं आशीर्वादस्वरूप प्रचार-प्रसार कक्ष पुरानो बानेश्वर २०६४ सालको कार्तिक २७ गते आरती संचालन केन्द्रमा रूपान्तरित भयो। त्यसैअनुरूप यस केन्द्रमा नित्य आरती हुन थाल्यो । यसपछि आरतीलाई सुचारु गर्न आवश्यक टिमहरूको निर्माणपश्चात् यहाँबाट प्राणप्रतिष्ठित सामग्रीहरूको पनि बिक्री वितरण हुन थाल्यो। सिद्धाश्रम शक्ति केन्द्रबाट संचालन हुने प्रत्येक कार्यक्रमहरूमा भाग लिई आफ्नो टिमलाई प्राप्त भएको जिम्मेवारीलाई पनि राम्रोसँग निभाउँदै यस केन्द्रले आफूलाई प्रस्तावित सम्पर्क कार्यालयको रूपमा उभ्याउन २०६५ जेठ १ गते सफल भयो। यसपछि पनि आवश्यक अन्य युनिटहरूको गठन हुँदै गयो । प्रस्तावित सम्पर्क कार्यालयलाई सम्पर्क कार्यालयमा रूपान्तरण गर्न कार्यकर्ताहरूमाझ भएको जोश, जाँगर र हौसलाले थप ऊर्जा पायो । गठित प्रत्येक युनिटको नेतृत्व आध्यात्मिक उपनेतृत्व तहका कार्यकर्ताहरूबाट दिन थालियो ।

### *सम्पर्क कार्यालयमा रूपान्तरण*

२०६६ आषाढ ५ गते प्रस्तावित सम्पर्क कार्यालय पुरानो बानेश्वर सम्पर्क कार्यालयमा परिणत भएको घोषणाका साथै अ.ना.प. शैलीअन्तर्गत गुरु सेवा दलका ७ जना सदस्यको टिम पनि भित्र्याउन सफल भयो । राम्रोसँग गुरु कार्य गर्दै जाँदा आध्यात्मिक उच्चता प्राप्त हुँदै जाने र साथै भौतिक उन्नति, प्रगति पनि हुँदै जाने रहेछ । त्यसैअनुरूप अहिले आश्रममा थुप्रै भौतिक सामग्रीहरूका साथै आश्रमलाई आवश्यक पर्ने सुविधाहरू उपलब्ध छन् ।

२०६६ कार्तिक ५ गते बिहीबारदेखि आश्रममा बृहस्पतिबारको गुरु पूजन सम्पन्न भइरहेको छ। विभिन्न पर्व विशेषमा पनि विशेष पूजन हुँदै आइरहेको छ। गत तिहारमा पनि यस आश्रमले साधक साधिकाहरूको घर घरमा गएर दुई दिनसम्म देउसी-भैलो कार्यक्रमको आयोजना गरेको थियो। निकट भविष्यमा यस आश्रममा तान्त्रिक हिलिङ्ग र परामर्शको व्यवस्था पनि हुन गइरहेको छ भन्दा हर्षले सीमा नाघ्दछ ।

जय गुरुदेव !

## हवन कार्यक्रम

गत मंसिर १ गते सोमबार पशुपति मृगस्थलीस्थित गोरक्षपीठमा श्री शिव गोरक्ष हवन सम्पन्न भयो । उक्त हवन बिहान ८ देखि ९ बजेसम्म संचालन भएको थियो ।

त्यस्तै, मंसिर २ गते मङ्गलबार ललितपुरको लगनखेलस्थित वटुक भैरव मन्दिर परिसरमा तान्त्रोक्त वटुक भैरव हवन सम्पन्न भयो । उक्त हवन बिहान ७-८ बजेसम्म चलेको थियो । सहभागीहरूले सो दिन कुकुरलाई खाने कुरा दिनुपर्ने र पिट्न नहुने नियम छ ।

त्यसैगरी, मंसिर ३ गते बुधबार बिहान ८ देखि ९ बजेसम्म ललितपुरको लगनखेलस्थित महालक्ष्मी मन्दिर परिसरमा तान्त्रोक्त महालक्ष्मी हवन सम्पन्न भयो । उक्त हवनमा सहभागीहरूले दिनभरि रिसाउन नपाउने चलन छ ।

गत मंसिर ४ गते बिहीबार लगनखेलको कुम्भेश्वरस्थित बगलामुखी मन्दिर परिसरमा तान्त्रोक्त बगलामुखी हवन सम्पन्न भयो । उक्त हवन बिहान ८–९ सम्म सञ्चालन भएको थियो ।

यस्तै मासिक हवनकै शृङ्खलामा गत मंसिर ३ गते बुधबार पोखराको विन्ध्यवासिनी मन्दिर प्रांगणमा तान्त्रोक्त विन्ध्यवासिनी हवन कार्यक्रम सम्पन्न भयो । त्यसैगरी मंसिर ४ गते बिहीबार तनहुँको दमौलीस्थित वेदव्यास गुफा परिसरमा तान्त्रोक्त महर्षि वेदव्यास हवन कार्यक्रम सम्पन्न भयो भने मंसिर २ गते मंगलबार भक्तपुरको सूर्यविनायक मन्दिर प्रांगणमा तान्त्रोक्त गणपति हवन सम्पन्न भयो ।

त्यसैगरी, परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, अनुकम्पास्वरूप सम्पर्क कार्यालय बनेपाले गत मंसिर २ गते मंगलबारदेखि तान्त्रोक्त चण्डेश्वरी हवन शुभारम्भ गरेको छ । चण्डेश्वरी मन्दिरको प्रांगणमा आयोजित यो हवन अबदेखि प्रत्येक महिनाको पहिलो मंगलबार बिहान ७ बजेदेखि ८ बजेसम्म सञ्चालन हुनेछ ।

## दिव्य गुरु महोत्सव

श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पा र आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले अंग्रेजी महिनाको २१ तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउँदै आउने क्रममा गत मंसिर ६ गते संस्थाले यस महोत्सवलाई भव्यताका साथ सम्पन्न गऱ्यो । परमपूज्य सद्‌गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूको रूपमा परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको धरतीमा अवतरणको पावन दिनको स्मरणस्वरूप प्रत्येक अंग्रेजी महिनाको २१ तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाइँदै आइरहेको स्मरणीय छ ।

काठमाडौँको जैन भवनमा आयोजित उक्त महोत्सव बिहान १०:३० मा स्तुति-वन्दना, निखिल स्तवनको सस्वर पाठसँगै शुभारम्भ भएको थियो । महोत्सवमा गुरु पादुका पूजन, मन्त्रजप, हवन, आरती, भजनकीर्तन र नृत्यका कार्यक्रम सम्पन्न भएका थिए । दिव्य गुरु महोत्सवमा सद्‌गुरुदेवहरूको श्रीचरणकमलमा लाख बत्ती पनि अर्पण गरिएको थियो । महोत्सवमा सोफी के.सी., सम्झना अर्याल, बालकुमारी श्रेष्ठ र अमृतबहादुर श्रेष्ठले दिव्य पादुका पूजन गर्ने सौभाग्य पाउनुभएको थियो ।

महोत्सवको दोस्रो चरणमा गुरुसेवा दलकी सदस्य नीता प्याकुरेलले उपस्थित सबैलाई संस्थाको तर्फबाट स्वागत गर्नुभएको थियो । दोस्रो चरणको कार्यक्रममा भजन-कीर्तन, नृत्य सम्पन्न हुनुका साथै सावरपन्थी सदस्यज्यूहरूले स्ववचनमार्फत आध्यात्मिक विषयमा प्रकाश पार्नुभएको थियो । सावर पन्थी नं. १ ज्यूले संस्थाभित्र प्रवेश गरेकाहरूले सद्‌गुरुदेवहरूलाई प्राप्त गरेर जीवनलाई सार्थक बनाउन र चौरासीको चक्रबाट मुक्त हुन सबैले प्रयास गर्नुपर्ने बताउनुभयो । उक्त अवसरमा विशेष ध्यान पनि प्रदान गरिएको थियो ।

कार्यक्रममा अमूल्य मानव जीवनको महत्त्वलाई बुझेर जप, ध्यान, साधना, गुरुकार्य आदिका माध्यमबाट यस जीवनलाई आध्यात्मिक उच्चतामा पुऱ्याउनु पर्नेमा सावर पन्थी नं. २ ज्यूले जोड दिनुभयो ।

महोत्सवमा हालै गुरु सेवा दलमा पदार्पण गर्नुभएका कार्यकर्ताहरूलाई हरियो पोशाक प्रदान गरिएको थियो । साथै गोरक्ष निखिल वाणीको २० जना वार्षिक ग्राहक बनाएर पत्रिकालाई जनजनमा पुऱ्याउने कार्यमा महत्त्वपूर्ण योगदान गर्नुहुने सुस्मिता देवान, टोपबहादुर बस्नेत, मैयाँ बुढाथोकी, भवानी थपलिया, केशव पाण्डे, मधुकुमारी रायमाझी, सुभद्रा श्रेष्ठ, जुनु महर्जन, शिवराम बानियाँ र राजकुमार सिलवाललाई विशेष उपहार प्रदान गरिएको थियो भने अजितकुमार सापकोटाले ५० जना सदस्य बनाएर विशेष उपहार पाउनुभएको थियो ।

## का.स.स. क र ख समूहको तालिम

सिद्धाश्रम शक्ति केन्द्रले गत मंसिर २० र २१ गते संस्थाको कार्यकर्ता संरचनाअन्तर्गत रहेको कार्यकर्ता सहायक समूह (का.स.स.) क र ख तहको तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न गऱ्यो। काठमाडौँको कमलपोखरीस्थित जैन भवनमा आयोजित दुई दिवसीय उक्त तालिम तथा प्रशिक्षण कार्यक्रम का.स.स. क समूहको लागि बिहान ६:३० बाट शुरु भई १०:४५ सम्म तथा का.स.स. ख समूहको लागि बिहान ११:३० बजेबाट शुभारम्भ भई साँझको नित्य ५:०० बजेको आरतीपछि टुंगिएको थियो ।

सद्गुरुदेवहरूको स्तुति वन्दना-प्रार्थनाबाट शुभारम्भ भएको उक्त कार्यक्रममा गुरु पूजन पनि सम्पन्न भएको थियो । गुरु पादुका पूजनको चरणमा पूजन गर्ने सौभाग्य पाउनेहरूमा का.स.स. क समूहबाट आशा थापा, जुनी कुमाल, प्रमिला पराजुली, सुरेन्द्र कुशवाहा, चञ्चला शर्मा, सूर्यमाया थापा, राधादेवी श्रेष्ठ र रूपा अर्याल हुनुहुन्थ्यो भने का.स.स.ख समूहबाट जुनु महर्जन, निशा ढकाल, जसोदा भुजेल, रामकला कार्की, ठाकुरप्रसाद कार्की, सुमित्रा गौतम, गोमती थापा हुनुहुन्थ्यो ।

सिद्धाश्रम शक्ति केन्द्रकै इतिहासमा पहिलोपटक दुवै समूहबाट गरी जम्मा ७०२ जना प्रशिक्षार्थीको संख्या प्राप्त भएको उक्त तालिम कार्यक्रममा सद्गुरुदेव, योग विद्या, सि.श.के. नेपाल, गो.नि.वा. पत्रिका, गो.नि. सन्देश, अ.ना.प. कार्यशैली आदि विषयहरूमा प्रशिक्षार्थीहरूलाई प्रशिक्षण प्रदान गरिएको थियो । उक्त अवसरमा विशेष 'रामा' ध्यान पनि प्रशिक्षार्थीहरूले प्राप्त गर्नुभएको थियो । कार्यक्रमको बीचबीचमा भजन पनि प्रस्तुत भएका थिए । कार्यक्रममा विभिन्न जिल्लाबाट आउनुभएका ५५४ जना प्रशिक्षार्थीहरूको सहभागिता रहेको थियो । तालिममा प्राप्त ग्रेडिङअनुसार क समूहबाट ३५ जना पदोन्नत भई आध्यात्मिक उपनेतृत्व तहमा जानुभएको थियो भने ख समूहबाट ७९ जना पदोन्नत भई क समूहमा प्रवेश गर्नुभएको थियो ।

## मनमानेश्वरी मन्दिरको सरसफाइ

प्रस्तावित सम्पर्क कार्यालय विशालनगरले गत सालको माघदेखि मासिक कार्यक्रमको रूपमा संचालन गर्दै आइरहेको मन्दिर सरसफाइ कार्यक्रमअन्तर्गत गत मंसिर ६ गते मनमानेश्वरी मन्दिरको सफाइ कार्यक्रम सम्पन्न गऱ्यो ।

## काठमाडौं क्षेत्रीय कार्यालय-१ को प्रशिक्षण

सिद्धाश्रम शक्ति केन्द्र काठमाडौँ क्षेत्रीय कार्यालय–१ को पहिलो प्रशिक्षण कार्यक्रम गत मंसिर १३ गते विविध कार्यक्रमका बीच सम्पन्न भयो ।

काठमाडौँको बसुन्धरास्थित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा दिउँसो १२ बजेदेखि शुभारम्भ भएको उक्त कार्यक्रममा भजन-कीर्तन र नृत्य पनि प्रस्तुत भएका थिए ।

काठमाडौँ क्षेत्रीय कार्यालय–१ का सहप्रजात तथा सम्पर्क कार्यालय पुरानो बानेश्वरकी हाजिनाज्यूले स्वागत मन्तव्य दिनुभएको उक्त कार्यक्रममा सावरपन्थी सदस्य १ ज्यूले विशेष ध्यान प्रदान गर्नुभएको थियो । बोल्ने क्रममा उहाँले आत्मीयता आदान-प्रदान र भेटघाटको रूपमा यस प्रशिक्षणलाई लिनुपर्ने बताउनुभए पनि थुप्रै आध्यात्मिक कुराहरूबाट उहाँले कार्यकर्ताहरूलाई आध्यात्मिक खुराक दिनुभएको थियो ।

कार्यक्रममा सावरपन्थी सदस्य २ ज्यूले अन्तर्क्रियामार्फत कार्यकर्ताहरूले सोध्नुभएका प्रश्नहरूको उत्तर दिनुभएको थियो ।

कार्यक्रममा काठमाडौँका प्रचारप्रसार कक्ष, आरती संचालन केन्द्र, प्रस्तावित सम्पर्क कार्यालय, सम्पर्क कार्यालय र गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमका कार्यकर्ताहरूको उपस्थिति रहेको थियो ।

## तीनकुने र गोदावरी पनि स.का.

सिद्धाश्रम शक्ति केन्द्रको सांगठनिक ढाँचा अज्ञात नाथ पन्थीको नयाँ कार्यशैलीअनुरूप तीव्ररूपमा विस्तारित हुने क्रममा रहेको छ। यसअन्तर्गत देशका विभिन्न जिल्लाहरूमा नयाँ सांगठनिक इकाइहरू थपिने क्रममा छन् भने हालका इकाइहरू पनि अझ सुदृढ हुँदै अघि बढिरहेका छन् । यसै क्रममा प्रस्तावित सम्पर्क कार्यालयको रूपमा हालसालै विकसित भएका तीनकुने (काठमाडौँ) र गोदावरी (ललितपुर) मा रहेका सिद्धाश्रम शक्ति केन्द्रका इकाइहरू गत मंसिर १९ गते शुक्रबारका दिनदेखि सम्पर्क कार्यालयमा परिणत भएका छन् । आगामी दिनमा सम्पर्क कार्यालयहरूको संख्यामा अझ वृद्धि हुँदै जाने आशा गरिएको छ ।

# जाँदा जाँदै

*मानवजीवन केको लागि हो भन्ने प्रश्न सधैं अहं रहने गरेको छ र जीवनको परिभाषा, जीवनको लक्ष्य, उद्देश्यको बारेमा पनि आआफ्ना किसिमबाट परिभाषाहरु आइरहेका हुन्छन्। कसैको लागि जीवन सुख, सुविधाको लागि हुन सक्छ, जीवनको लक्ष्य नै सम्पूर्ण भौतिक सुख, सुविधाको प्राप्ति, ऐश, आराम प्राप्ति हुन सक्छ। कसैको लागि जीवन भनेको आफ्ना सन्ततिहरुको भविष्य स्वर्णिम बनाउने हुन्छ र उनीहरुको सम्पूर्ण जीवन आफ्ना सन्ततिहरुको लागि कार्य गर्दागर्दै, उनीहरुको भविष्य सुन्दर बनाउने प्रयास गर्दागर्दै बित्छ। कसैको लागि जीवन मान सम्मान प्राप्तिको लागि हुन्छ र उनीहरुको जीवन, मान सम्मान, प्रतिष्ठा प्राप्तिका लागि विभिन्न कोशिश गर्दागर्दै बित्छ र कसैको लागि जीवन शान्तिपूर्णरुपमा बाँच्नु हुन्छ। केही भए पनि, नभए पनि दिन रात शान्तिका साथ गुज्रिन्छन्। कतिपय व्यक्तिहरु यसैमा सन्तुष्ट हुन्छन् र उनीहरुको जीवन यसको वरिपरि नै घुम्दछ भने कतिलाई जीवनका यी सबै कुराहरुले सन्तुष्टि दिन सक्दैनन् र जीवनको अर्थ र मान्यता उनीहरुको लागि अर्कै हुन सक्छ। यस्ता व्यक्तिहरुले चाहन्छन् कि उनीहरुको जीवनले आफ्नो लागि मात्र नभएर हजारौं लाखौंको लागि, मानव समुदायको लागि नै ज्योति दिन सकोस् र जीवन यस्तो बनोस् कि त्यो जीवनले हजारौंको अनुहारमा मुस्कान दिन सकोस्, हजारौं लाखौंको आँसु पुछ्न सकोस् र सबैलाई नै खुशी, सुख, शान्ति दिन सकोस्। जब व्यक्ति यस्तो जीवन अरुलाई दिन अग्रसर हुन्छ, उसको जीवन पनि सामान्य अवश्य हुँदैन। उसले जीवनमा धेरै चुनौति र दुःख, समस्याहरुको सामना त गर्नैपर्छ। जब व्यक्तिले आफ्नो लागि मात्र सोच्दैन, सबैको लागि सोच्दछ, सम्पूर्ण विश्वको लागि सोच्दछ भने त्यसअनुरुपकै कानूनी जटिलताहरु, अप्ठ्यारा स्थितिहरु स्वाभाविकरुपले उसको अगाडि आउँछन् र उसको यात्रा आफैमा कठिन बन्दछ। एउटा सीमित दायरालाई सोच्दा सीमित समस्याहरु आउँदछन् भने असीमित दायरालाई सोच्दा समस्या, बाधा, अड्चन, व्यवधानहरु पनि असीमितरुपमा आउँछन्। यी सबैलाई पार गरेर हिंड्नु सामान्य अवश्य पनि छैन। तर जसको हृदयमा वास्तवमा नै साहस छ र वास्तवमा नै जगकल्याणको भावना छ, त्यस्तो व्यक्तिलाई कुनै असामान्य स्थिति र कठिनाइहरुले रोक्न सक्तैनन्। नदीको लक्ष्य हुन्छ सागरमा गएर लीन हुनु। सागरतर्फ बढ्ने क्रममा अनेकौं बाधा, व्यवधानहरु आउँछन्, अनेकौं रोकावटहरु आउँछन्। तर पनि नदीको बेग रोकिँदैन र ऊ गतिशील हुन्छ अनि अन्ततोगत्वा ऊ सागरमा विलीन हुन्छ। त्यस्तै, व्यक्तिहरु पनि अनेकौं बाधा, व्यवधानहरुलाई छिचोल्दै अघि बढ्छन्। अन्तमा एउटा क्षण यस्तो आउँछ कि उनीहरुको सतत प्रयासबाट लोकले नै केही प्राप्त गर्दछ र यस्तो आफ्नो जीवनबाट, आफ्नो वरिपरिको सोचाइबाट, आफूसम्बन्धी लक्ष्यबाट माथि उठेको व्यक्तित्व वास्तवमा मानव नभएर महामानव बन्दछ। यसमा उसको व्यक्तिगत जीवनचाहिँ जलिरहेको हुनसक्छ, अनेकौं सन्तापमा गुज्रिरहेको हुन सक्छ। हामीले महापुरुषहरुलाई हेर्‍यौं भने प्रत्येक महापुरुषले आफूलाई जलाएर लोकलाई उज्ज्वलता, आलोक र शीतलता दिनुभएको छ। अँध्यारो हटाएर समाजलाई उज्यालो दिने क्रममा व्यक्ति स्वयं जलेको हुन्छ र दुःख, समस्याबाट छुटकारा पाएर समाजलाई शीतलता दिने क्रममा व्यक्ति स्वयं धेरैधेरै तड्पिएको हुन्छ। तर यो तड्पाइ, यो जलाइ पनि त्यस्तो लोककल्याणकारी भाव भएका व्यक्तिहरुलाई प्रिय बन्न सक्दछ। मानिस भएर यस्तो लोककल्याणको भाव छ भने वास्तवमा नै त्यो मानवजीवन प्रशंसनीय छ, अनुकरणीय छ र धर्तीमातालाई सधैं नै यस्ता व्यक्तित्वहरुको, यस्ता सन्ततिहरुको आवश्यकता पर्दछ। सम्पूर्ण पृथ्वीलाई नै आफ्नो घर सम्झेर सम्पूर्ण मानवताप्रतिको कर्तव्यलाई निर्वाह गर्दै अघि बढेको व्यक्ति वास्तवमा धर्तीमाताको लागि पनि प्रिय हुन्छ। आज धर्तीमाताले यस्तै पुत्र र पुत्रीहरु मागिरहनुभएको छ। यस्ता व्यक्तित्वहरुको जमघटबाट नै धर्तीमा नयाँ युगको आगमन हुन सक्दछ अन्यथा आफ्नो लागि, आफ्नो परिवारको लागि, आफ्नो वरिपरिका व्यक्तिहरुको लागि, मानसम्मान, सुखसयल प्राप्तिको लागि कोशिश गर्दागर्दै जीवन बित्दछ। अधिकांश मानिसहरुको जीवन यसरी नै बितिरहेको हुन्छ। तर यदि कसैमा अद्भुत इच्छा जाग्दछ र केही गर्नका लागि ऊ वास्तवमा अघि बढ्दछ भने कुनै पनि बाधा, व्यवधानले उसको कदमलाई रोक्न सक्तैन र ऊ अघि बढ्छ। यस्तो क्रममा व्यक्ति स्वयं जलेर पनि लोकलाई आलोक दिन्छ, व्यक्ति स्वयं तड्पेर पनि समाजलाई शीतलता दिन्छ।*

*हामी सिद्धाश्रम शक्ति केन्द्रमा आबद्ध भएर आज गोरक्ष निखिल युगको लागि अघि बढिरहेका छौं। गोरक्ष निखिल युग भनेको सम्पूर्ण विश्वको लागि हो, प्रत्येक मानवको लागि हो। त्यसैले, सिद्धाश्रम शक्ति केन्द्रसँग आबद्ध व्यक्तिहरु पनि कुनै सामान्य व्यक्तित्व हुन सक्तैनन् किनकि जगकल्याणको लागि उनीहरुको कदम अघि बढिरहेको छ। यस्तै अघि बढिरहेका कदमहरुबाट छिटोभन्दा छिटो यस धर्तीमा शीतलता छाओस्, छिटोभन्दा छिटो अहिलेको अँध्यारो हटेर विश्व उज्ज्वल बनोस्, यही कामना व्यक्त गर्दछौं। अस्तु!*